


066-WO-0963
2066।9।21
9219

श्री सर्वोच्च अदालतमा चढाएको

निवेदन-पत्र

विषयः नेपालको संविधानको धारा ४६/१३३ (२) (३) बमोजिम लैङ्गिक पहिचानको हक, शिक्षा सम्बन्धी हक लगायतका मौलिक हकको प्रभावकारी कार्यान्वयनका लागि उत्प्रेषण, परमादेश लगायत उपयुक्त आज्ञा, आदेश वा पुर्जी जारी गरिपाउँ ।

जिल्ला ललितपुर, ललितपुर महानगरपालिका वडा नं. १६, पतको टोल वस्ने वर्ष २२ को महिला रुक्शना कपाली ................................१ निवेदक

विरुद्ध

नेपाल सरकार मन्त्रीपरिषद, प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय, सिंहदरबार, काठमाडौं .......................................................................१

त्रिभुवन विश्वविद्यालय, परिक्षा नियन्त्रण कार्यालय, बल्खु, काठमाण्डौं ..............१

त्रिभुवन विश्वविद्यालय उपकुलपतीको कार्यालय, कीर्तिपुर ..........१

राष्ट्रिय परिक्षा बोर्ड, थिमि, भक्तपुर .............................................१ विपक्षी

गृह मन्त्रालय, सिंहदरबार, काठमाडौं ............................................१

शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय, सिंहदरबार, काठमाडौं.......................१

कानून, न्याय तथा संसदीय मामिला मन्त्रालय, सिंहदरबार, काठमाडौं ............१

राष्ट्रिय परिचयपत्र तथा पञ्जीकरण विभाग, सिंहदरबार, काठमाडौं ................१

जिल्ला प्रशासन कार्यालय, ललितपुर ............................................१

जिल्ला शिक्षा विकास तथा समन्वय इकाइ, कनिबहाल ललितपुर ..........१

ललितपुर महानगरपालिकाको कार्यालय, ललितपुर ................................१

ललितपुर महानगरपालिका वडा नं १६ को कार्यालय, धौभल, ललितपुर ............१

राष्ट्रिय मानव अधिकार आयोग, हरिहरभुवन, ललितपुर.................................१

राहदानी विभाग, कान्तिपथ, काठमाण्डौं .............................................१



✓निर्वाचन आयोग, कान्तिपथ, काठमाण्डौं ...................................................१

✓इडेन गार्डेन आवासिय विद्यालय, ललितपुर म.न.पा. वडा नं. २२, ललितपुर ........१

मुद्दा : उत्प्रेषण परमादेश समेत

म निवेदक नियमानुसार लाग्ने निवेदन दस्तुर यसैसाथ संलग्न गरि नेपालको संविधानको धारा १, १२, १६, १७, १८, २७, २८, ३१, ३३, ३५, ३७, ३८, ३९, ४२ एवं धारा १३३(२)(३) तथा सर्वोच्च अदालत नियमावली, २०७४ को नियम ४० बमोजिम निम्नलिखित निवेदन गर्दछु।

१. प्रस्तुत निवेदन सहित संलग्न कतिपय मेरो शैक्षिक प्रमाणपत्र लगायतका कागजपत्र तथा विपक्षी निकायहरूलाई गरिएका पत्राचारहरू एवं विपक्षी निकायहरूले गरेका पत्राचारहरूमा म निवेदकको वास्तविक लैङ्गिक पहिचान विपरीतको नाम तथा लैङ्गिक विवरण उल्लेख छ । अतः उक्त कागजपत्रहरू सार्वजनिक भएको अवस्थामा मेरो व्यक्तिगत विवरणको गोपनीयता समेत भङ्ग हुन जाने भएकोले सो कागजपत्रहरूलाई गोप्य राखि पाउँ ।

२. म निवेदक नेपाली नागरिक हुँ। म पारलैङ्गिक महिला (Transgender Woman) हुँ । मेरो लैङ्गिक पहिचान महिला हो । नेपाली नागरिक भएका नाताले संविधान तथा कानूनद्वारा संरक्षित शिक्षा लगायतका मौलिक हकको उपभोग गर्न पाउनु, वास्तविक लैङ्गिक पहिचान सहितको आत्मसम्मानपूर्ण जीवन बाँच्न पाउनु एवं राज्यका श्रोतसाधनहरूमा समान पहुँच पाउनु मेरो आधारभूत मानव अधिकार हो। तर म निवेदक पारलैङ्गिक महिला भएकाले मलाई उल्लेखित अधिकारहरूबाट बञ्चितिकरणमा पारिएको छ। त्रिभुवन विश्वविद्यालयले मैले पेश गरेको त्रिभुवन विश्वविद्यालय रजिष्ट्रेशन फारम (TU Registration Form) दर्ता गर्न इन्कार गरेका कारण म उच्च शिक्षा अध्ययन गर्नबाट बञ्चित छु। मेरो नागरिकता र शैक्षिक प्रमाणपत्र लगायतका कानूनी कागजप्रमाणमा उल्लेखित व्यक्तिगत विवरण मेरो लैङ्गिक पहिचान बमोजिम संशोधन हुन नसक्दा मेरो आत्मसम्मानमा गम्भीर चोट पुग्न गएको छ । साथै सञ्चारमाध्यमहरू लगायत राज्यका विभिन्न निकायहरूबाट मेरो व्यक्तिगत विवरणहरूको गोपनीयता भङ्ग हुने कार्य भएको छ। वि निकायहरूबाट मैले अपमानजनक टिप्पणीहरूको सामना गर्नु परेको छ । यस्ता समस्याहरूको समाधानका लागि विपक्षी निकायहरूसँग पटक पटक मौखिक र लिखित निवेदन गर्दा समेत कुनै सुनुवाई हुन नसकेकाले बाध्य भै म माथी भएको अन्यायहरूको सम्बोधन तथा संविधान प्रदत्त मौलिक हकको प्रचलनका लागि अन्य वैकल्पिक उपचारको अभावमा प्रस्तुत निवेदन लिई सम्मानित अदालतको शरणमा आएको छु ।

३. म निवेदक र म जस्ता पारलैङ्गिक महिला लगायत पारलैङ्गिक व्यक्तिहरूको पहिचान, [illegible] र विविधता बारे संयुक्त राष्ट्रसंघ, अन्तर्राष्ट्रिय समुदाय र यस क्षेत्रमा क्रियाशिल [illegible]

संघसंस्थाहरूद्वारा गरिएको अध्ययन अनुसन्धान एवं प्रकाशित दस्तावेजहरूले निम्नानुसार हुने उल्लेख गरेका छन् :

३.१ **लैङ्गिक पहिचान (Gender identity)** : व्यक्तिको भित्री मन वा अन्तरात्माबाट लैङ्गिकता सम्बन्धी आएको व्यक्तिगत अनुभूती, अभिव्यक्ति तथा आफ्नो लैङ्गिकता चिनाउन प्रयोग गर्ने शव्दवाली हो । प्रत्येक व्यक्तिको लैङ्गिकता सम्बन्धी आफ्नो आन्तरिक बोध (internal sense) निजको लैङ्गिक पहिचान हो ।

***Argentina's Gender Identity Law as approved by the Senate of Argentina on May 8, 2012:*** Article 2 – Definition. Gender identity is understood as the internal and individual way in which gender is perceived by person's, that can correspond or not to the gender assigned at birth, including the personal experience of the body. This can involve modifying bodily appearance or functions through pharmacological, surgical or other means, provided it is freely chosen. It also includes other expressions of gender such as dress, ways of speaking and gestures.

***American Psychological Association - Transgender People, Gender Identity and Gender Expression:*** Gender identity refers to a person's internal sense of being male, female or something else; gender expression refers to the way a person communicates gender identity to others through behavior, clothing, hairstyles, voice or body characteristics.

***SOGIE Equality Bill, Philipines:*** Sec. 3. Definition of Terms – d. Gender identity refers to the personal sense of identity as charactericized among others, by manner of clothing, inclinations, and behavior in relation to masculine or feminine conventions.

***Transgender Persons (Protection of Rights) Act, 2018 – Pakistan:*** 2. Definitions – (f) "Gender identity" means a person's innermost and individual sense of self as male, female or a blend of both or neither; that can correspond or not to the sex assigned at birth.

***Resilient Individuals: Sexual Orientation, Gender Identity & Intersex Rights (ISBN 978-1-921449-71-0), Australian Human Rights Commission:*** Gender identity - The term 'gender identity' refers to a person's deeply held internal and individual sense of gender.

***Policy on Preventing Discrimination because of gender identity and expression, Ontario Human Rights Commission:*** 3 - Gender identity & expression - Gender identity is each person's internal and individual experience of gender. It is a person's sense of being a woman, a man, neither or anywhere along the gender spectrum. A person's gender identity may be the same as or different from their birth-assigned sex.

***Gender Identity, Gender Expression and Sex Characteristics Act, Malta:*** 2. "gender identity" refers to each person's internal and individual experience of gender, which may or may not correspond with the sex assigned at birth, including the personal sense of body (which may involve, if freely chosen, modification of bodily

appearance and, or functions by medical, surgical or other means) and other expression of gender, including name, dress, speech and mannerisms:

विश्वका १५५ देश तथा क्षेत्रमा फैलिएको संस्था ***International Lesbian, Gay, Bisexual, Trans and Intersex Association (ILGA)*** को ***Glossary:*** Gender identity refers to each person's deeply felt internal and individual experience of gender, which may or may not correspond with the sex they were assigned at birth.

***Scotland's Census 2021 Sex and Gender Identity Topic Report:*** (Page 5) Gender identity refers to our internal sense of who we are, and how we see ourselves in regards to being a man, a woman, or somewhere between/beyond these identities.

***Born Free and Equal – Sexual Orientation, Gender Identity & Sex Characteristics in International Human Rights Law, Second Edition, United Nations Human Rights Office of the High Commissioner:*** (Page 5) Gender identity reflects a deeply felt and experienced sense of one's own gender.

***Frequently asked questions on health and sexual diversity, an introduction to key concepts, World Health Organization (WHO/FWC/GER/16.2):*** Gender identity is understood to refer to each person's deeply felt internal and individual experience of gender, which may or may not correspond with the sex assigned at birth.

३.२ शिशु जन्मने वित्तिकै कतिपय अवस्थामा यौनाङ्गको आधारमा वा कतिपय अवस्थामा अभिभावकको इच्छाको आधारमा निजलाई बालक वा बालिका भनेर इङ्गित गरिन्छ, जसलाई ***जन्मँदा इङ्गित गरिने लैङ्गिकता (Gender assigned at birth)*** भनिन्छ । यो निर्धारण अभिभावक, संरक्षक लगायतका व्यक्तिहरूले अक्सर निज शिशुको यौनाङ्ग हेर्छन् र शिश्न (Penis) भएमा केटा र योनी (Vagina) भएमा केटी भनी इङ्गित गरिन्छ । कतिपय अवस्थामा शिशुको अस्पष्ट वा दुवै यौनाङ्ग छ भने निजलाई उसको अभिभावकको इच्छाएको अनुसार केटा वा केटी भनी निर्धारण गरिन्छ । कुनै शिशुको जन्म हुन वित्तिकै उसले आफ्नो लैङ्गिकता के हो भनि स्वयंले भन्न सक्दैन । अत: अभिभावक वा संरक्षकले निजको यौनाङ्ग हेरि सामाजिक मूल्य मान्यता अनुसार गरिदिएको निर्धारण भएकाले जन्मँदा इङ्गित गरिने लैङ्गिकता भनिएको हो ।

बच्चा जन्मन वित्तिकै यौनाङ्गको आधारमा शिश्न भए केटा वा योनी भए केटी भनि हुर्काइन्छ । कुनै पनि शिशुलाई शिशुअवस्थामा आफ्नो लैङ्गिकता बारे चेतना हुने कुरा भएन / हुँदैन । समाजले हुर्काएको उक्त लैङ्गिकता उसको स्व:अनुभूतीको लैङ्गिकता होइन भनि ऊ स्वयंले बुझ्न पनि समय लाग्छ । अधिकांश पारलैङ्गिक व्यक्तिहरू आफ्नो स्व:अनुभूतीको लैङ्गिकता अनुरूपका हाउभाउ, प्रवृत्ति वा बानिव्यहोरा सानै उमेर देखि अभिव्यक्त गर्न थाल्छन् । तर हाम्रो सामाजिक परिवेशमा पारलैङ्गिक व्यक्ति वा लैङ्गिक विविधता बारे व्यापक जनचेतना नै छैन । कुनै व्यक्ति समाजको यस लैङ्गिकता सम्बन्धीको मान्यता भन्दा अलिकति पनि 'फरक' लागेमा उसले नानाथरीका लाञ्छना,



हिंसा र विभेदको शिकार हुनुपर्छ । यसरी ती व्यक्तिलाई आफू किन यस्तो भएको, वा आफू किन अरु जस्तो नभएको भनि आफ्नो मनभित्र द्वन्द हुन सक्छ तर नेपालको परिवेशमा म पारलैङ्गिक व्यक्ति रहेछु है, यस्तो पनि हुँदो रहेछ है, यो पूर्णतः सामान्य र प्राकृतिक हो है भनेर बुझ्न पनि स्रोत सामाग्री तथा पहुँचको अभाव हुन सक्छ । स्रोत सामाग्रीमा पहुँच भएतापनि आफ्नो लैङ्गिक पहिचान बारे आफू स्वयं विश्वस्त भएतापनि अरु व्यक्ति तथा समाजको हिंसा र लाञ्छनाको डरले आफू खुलेर आउन सक्ने वातावरण नहुन सक्छ । कतिपय पारलैङ्गिक व्यक्तिहरू ती सबका वावजुत पनि हिम्मत गरि समाजमा खुल्न सक्छन् भने कतिपय व्यक्तिहरू सक्दैनन् । यी सबै जटिल समाजिक, सांस्कृतिक, आर्थिक लगायतका पृष्ठभूमीले पनि व्यक्ति आफूले आफ्नो पहिचानमा कहिले विश्वस्त हुन्छ र कहिले आफ्नो पहिचान खुलेर जीवनयापन गर्न सक्छ भन्ने विषय व्यक्तिपरक हुने गर्दछ ।

अतः लैङ्गिक पहिचान व्यक्ति हुर्कंदै जाने क्रममा निजले गर्ने आफ्नो लैङ्गिकता सम्बन्धीको अनुभूतीवाट थाहा हुँदै जाने विषय हो ।

३.३ *पारलैङ्गिक व्यक्ति (Transgender person)* भन्नाले जन्मँदा इङ्गित गरिएको लैङ्गिकता भन्दा फरक लैङ्गिक पहिचान भएका व्यक्तिहरू हुन् । ***पारलैङ्गिक महिला** (Transgender Woman/Trans Woman)* भन्नाले जन्मँदा यौनाङ्गको आधारमा बालक/केटा भनेर इङ्गित गरिएका महिलाहरू हुन् । ***पारलैङ्गिक पुरुष** (Transgender Man/Trans Man)* भन्नाले जन्मँदा यौनाङ्गको आधारमा बालिका/केटी भनेर इङ्गित गरिएका पुरुषहरू हुन् ।

***American Psychological Association - Transgender People, Gender Identity and Gender Expression:*** Transgender is an umbrella term for persons whose gender identity, gender expression or behavior does not conform to that typically associated with the sex to which they were assigned at birth. "Trans" is sometimes used as shorthand for "transgender."

***Resilient Individuals: Sexual Orientation, Gender Identity & Intersex Rights (ISBN 978-1-921449-71-0), Australian Human Rights Commission:*** Gender identity - Trans: The term 'trans' is a general term for a person whose gender identity is different to their sex at birth. A trans person may take steps to live permanently in their nominated sex with or without medical treatment.

***विश्वका १५५ देश तथा क्षेत्रमा फैलिएको संस्था International Lesbian, Gay, Bisexual, Trans and Intersex Association (ILGA) को Glossary:*** Trans is an inclusive umbrella term referring to people whose gender identity and/or gender expression differ from the sex/gender they were assigned at birth.

*United Nations Free & Equal – Definitions:* "Transwomen identify as women but were classified as males when they were born, transmen identify as men but were classified female when they were born."

*World Health Organization - FAQ on Health and Sexual Diversity An Introduction to Key Concepts:* "Trans women identify as women but were assigned as males when they were born. Trans men identify as men but were assigned female when they were born. Some transgender people seek surgery or take hormones to bring their body into alignment with their gender identity; others do not."

*United Nations Economic Commission for Europe - ECE/CES/BUR/2019/FEB/3 - In depth review of measuring gender identity:* Transgender seems to refer just to trans men and trans women, which is a better-known concept than non-binary gender and probably much more common. Note that a trans man has a gender (gender identity) of man/male, and similarly a trans woman has a gender of woman/female.

३.४ *यौन अभिमुखिकरण (Sexual orientation)* :- व्यक्तिहरूको यौन तथा प्रणयात्मक (Sexual and romantic) झुकाव एवं आकर्षणलाई **यौन अभिमुखिकरण** भनिन्छ । पारलैङ्गिक व्यक्तिहरू आफू भन्दा फरक/विपरीत लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने *विषमयौनिक (Heterosexual)* व्यक्ति, उस्तै लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने *समयौनिक (Homosexual)* व्यक्ति, आफू भन्दा फरक र आफू जस्तै लैङ्गिकता दुवै प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने *द्वियौनिक (Bisexual)* व्यक्ति, सबै खाले लैङ्गिकता प्रति यौन तथा प्रणयात्मक आकर्षण महसुस गर्ने *सर्वयौनिक (Pansexual)* व्यक्ति, कुनै प्रकारको यौन र/वा प्रणयात्मक आकर्षण महसुस नगर्ने *अयौनिक (Asexual)* व्यक्ति लगायत विविध यौन अभिमुखिकरणका हुन सक्छन् ।

३.५ भाषा र प्रयोगमा संवेदनशीलता सम्बन्धि

३.५.१ नेपाली भाषामा 'पारलैङ्गिक' शब्दको शाब्दिक व्युत्पत्ति 'लैङ्गिक' मूल शब्दमा 'पार' उपसर्ग जोडि भएको हो । संस्कृत भाषामा 'पार'को अर्थ 'across, on the other side' भन्ने लाग्छ । नेपाली भाषामा पनि यही अभिप्राय जनाउन प्रयोग गरिन्छ । *[नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौं संस्करण, विसं २०७७, पृष्ठ ७८२]* अङ्ग्रेजी भाषामा 'Transgender' शब्दको शाब्दिक व्युत्पत्ति 'gender' मूल शब्दमा 'trans' उपसर्ग जोडि भएको हो । ल्याटिन भाषामा 'trāns' को अर्थ "across, on the far side, beyond" हो । अङ्ग्रेजी भाषामा सोही अभिप्राय जनाउन 'trans' लाई उपसर्गका रूपमा प्रयोग गरिन्छ । *[Oxford Advanced Learner's Dictionary, Eight Edition, Oxford University Press, page 1644]*

३.५.२ परम्परागत नेपाली भाषामा Sex र Gender शब्दहरूमा फरक छुट्याइँदैनथ्यो । "लिङ्ग" शब्दको मात्र प्रयोग हुने गर्थ्यो । महिलावादी आन्दोलनको सुरुवात पछि "जैविक



लिङ्ग" - Sex र "सामाजिक लिङ्ग" - Gender भनि प्रयोग गर्ने प्रचलन समेत आएको थियो । हाल समसामायिक प्रयोजनमा Sexलाई "लिङ्ग" र Gender लाई "लैङ्गिकता" भनि प्रयोग गर्ने गरिन्छ । विसं २०७७को पुनर्मुद्रित दसौं संस्करण नेपाली वृहत् शब्दकोष पृष्ठ ११४३ ले "लैङ्गिकता" शब्दलाई अङ्गिकार गरेको छ । Gender लाई "लैङ्गिकता" भनि प्रयोग गर्ने प्रचलन स्थापित भइसकेको अवस्था छ । त्यसैले कुनै कतै ठाउँमा 'पारलिङ्गी' भनि प्रयोग हुन गएतापनि 'पारलैङ्गिक' शब्द नै उचित रहेको र यसै शब्दलाई पारलैङ्गिक जनसमुदाय तथा संघसंस्था समूहहरूले अङ्गिकार गरेको छ ।

३.५.३ 'पारलैङ्गिक' शब्द विशेषण हो । यस शब्द पछि नामपद शब्दहरू अनिवार्य राखुपर्ने हुन्छ । 'ऊ पारलैङ्गिक हो', 'उनीहरू पारलैङ्गिकहरू हुन्', 'She is a transgender.', 'They are transgenders.' - यसरी 'पारलैङ्गिक' शब्दलाई एकल रूपमा प्रयोग गर्न मिल्दैन। यस्तो प्रयोगलाई अपमानजनक मानिन्छ। 'ऊ पारलैङ्गिक व्यक्ति हो', 'उनीहरू पारलैङ्गिक व्यक्तिहरू हुन्', 'She is a transgender person', 'They are transgender people.' - भनि प्रयोग गर्नु उचित हुन्छ ।

३.५.४ 'पारलैङ्गिक' शब्द वर्णनकर्ता शब्द हो । यसले व्यक्तिको लैङ्गिक पहिचानलाई उसको जन्मँदा इङ्गित गरिएको लैङ्गिकताको तुलनाका आधारमा वर्णन गर्छ । 'पारलैङ्गिक (Transgender)' आफैमा छुट्टै लैङ्गिक पहिचान जनाउने शब्द भने होइन । 'पारलैङ्गिक' शब्दले केवल व्यक्तिको लैङ्गिक पहिचान (महिला वा पुरुष) उसको जन्मँदा इङ्गित गरिएको लैङ्गिकता भन्दा फरक रहेको भनि व्याख्या वा वर्णन गर्ने हेतुले प्रयोग गरिन्छ ।

३.५.५ Transgenderism एक अपशब्द हो । यो शब्द पारलैङ्गिक व्यक्तिहरूलाई रोगिकरण गर्नका लागि प्रयोग हुने गर्थ्यो । यो शब्दले पारलैङ्गिक व्यक्तिहरूलाई अमानवियकरण गर्दछ र पारलैङ्गिक पहिचानलाई एउटा medical condition को रूपमा व्याख्या गर्दछ । पारलैङ्गिक व्यक्ति हुनु पूर्णतः प्राकृतिक, जैविक र सामान्य रहेको विश्व स्वास्थ्य संगठनको ठहर छ । त्यसै गरि 'Transgendered' भनि प्रयोग गर्नु पनि गलत हो । विशेषण शब्दहरूमा '-ed' प्रत्यय लाग्दैन । यो केवल क्रियापद शब्दहरूमा प्रयोग गरिन्छ र 'Transgender' क्रियापद शब्द होइन । त्यसै गरि 'Transsexual' भन्ने अङ्ग्रेजी शब्द पनि कालविरुद्ध (outdated) शब्द हो । २०औं शताब्दीमा पारलैङ्गिक व्यक्तिहरूलाई मनोरोगिकरण गरि व्याख्या गर्न यो शब्दको प्रयोग हुने भएकाले यो शब्द अपमानजनक शब्द वा अपशब्द हो । पारलैङ्गिक व्यक्तिहरूलाई सामान्य वा प्राकृतिक नभई एउटा medical condition को रूपमा व्याख्या गर्ने अपशब्द 'Transsexual' भएको हुनाले समसामायिक कालखण्डमा हामी पारलैङ्गिक व्यक्तिहरू यो शब्दलाई प्रयोग गर्दैनौं ।

३.५.६ जन्मँदा इङ्गित गरिएको लैङ्गिकता भन्दा फरक लैङ्गिक पहिचान भएका व्यक्तिहरू 'पारलैङ्गिक व्यक्ति' (Transgender person) भनिएझैं, जन्मँदा इङ्गित गरिएको लैङ्गिकता



अनुरूप वा उही नै लैङ्गिक पहिचान भएका व्यक्तिहरू 'त्याचलैङ्गिक व्यक्ति' (Cisgender person) भनिन्छ । जन्मँदा यौनाङ्गको आधारमा वालक/केटा भनेर इङ्गित गरिएको र लैङ्गिक पहिचान पनि पुरुष हुने व्यक्तिहरू 'त्याचलैङ्गिक पुरुष' (Cis Man) र जन्मँदा यौनाङ्गको आधारमा वालिका/केटी भनेर इङ्गित गरिएको र लैङ्गिक पहिचान पनि महिला हुने व्यक्तिहरू 'त्याचलैङ्गिक महिला' (Cis Woman) भनि भनिन्छ ।

## ४. मेरो लैङ्गिक पहिचान सम्बन्धी मेरो व्यक्तिगत अनुभूतीको चर्चा :

म निवेदक नेपाल संवत् ११९९/०५/१६ मिति २०५५/११/२० गते ललितपुर जिल्ला साविक ललितपुर उ.म.न.पा. वडा नं. १८ हाल ललिलपुर म.न.पा. वडा नं. १६ मा जन्मिएँ । मलाई जन्मँदा यौनाङ्गको आधारमा वालक इङ्गित गरिएको थियो । मेरो अभिभावक तथा परिवारले हाम्रो परम्परा अनुसार 'मचा बू ब्यङ्केगु' रीति गर्दै मलाई एउटा नाम राखे । त्यस पछि मेरो जन्मदर्ता बनाउने देखि स्कुल भर्ना गर्दा त्यही नाम र लैङ्गिक विवरण प्रयोग गरियो । मेरो कारण जन्मदर्ता लगायतका विद्यालय स्तरका शैक्षिक प्रमाण पत्र सोही नाम र लैङ्गिक विवरणको आधारमा वने/बनाईए ।

मलाई समाजले सानै देखि 'केटा' भनेर भने, हेरे र त्यसरी नै हुर्काए । तर मैले सानै उमेर देखि आफूलाई 'केटी' भनेरै हेरें र वुझें । सर्वप्रथम त नेपाल, नेपालमा म हुर्केको सामाजिक परिवेश, शैक्षिक पाठ्यसामाग्री, सूचनामा पहुँच लगायतका विषयहरूले मेरो लैङ्गिक अनुभूती मैले नै वुझ्न सकेको अवस्था थिएन । मेरो लागि समाजले तँ यो होस् भन्ने र मैले आफू यो हुँ भन्ने बीच द्वंन्द चलि नै रह्यो । सानै उमेरमा घर वाहिर जाँदा मलाई 'केटा जस्तो' पहिरण लगाइन्थ्यो र त्यसरी नै प्रस्तुत हुनुपर्छ भन्ने कुरा गरिन्थ्यो भने घरको चार भित्तामा पुगिसकेपछि मैले आफूलाई केटीको पहिरणमै सजिने, आफूलाई केटाको नामले नै चिन्ने चिनाउने भइसह्यो । क्रमशः म जति हुर्कंदै गएँ त्यती नै मेरो आसपास-वरपरका परिवार र नातेदारहरूले 'यस्तो व्यवहार' नगर्न दबाब दिँदै गए । त्यसपछि मैले मेरो लैङ्गिकता अभिव्यक्त गर्ने अवशर, घरमा कोही नहुँदा आफू एक्लो भएको समयमा मात्र सीमित हुन पुग्यो ।

एक तिर म किन यस्तो, म किन अरु भन्दा 'फरक' जस्तो लागि नै रहन्थ्यो भने अर्को तिर मेरो लैङ्गिक अभिव्यक्तिकै कारण अरु व्यक्तिहरूवाट अवहेलना र लाञ्छनाको शिकार भइराख्नुपर्यो । यसले मनोभावनात्मक स्वस्थतामा असर पुर्याइ नै रह्यो । कक्षा ८ पढ्दै

रुक्शना



गर्दा हाँस्यकलाकार सन्तोष पन्तको छोरी पनि पारलैङ्गिक रहेको र यौनाङ्ग परिवर्तन शल्यक्रिया गरेको समाचारहरू जतातत‍ै फैलिएको र घर परिवार विद्यालय र सबैतिर यसकै बारे चियोचर्चा हुँदै गर्दा मैले एउटा पत्रिकामा उनको अन्तरवार्ता पढ्न पाएँ । त्यस पत्रिकामा मैले पहिलो पटक एउटा शब्द सुनें 'ट्रान्सजेण्डर' ।

कुनै अन्य स्रोतको अभावमा मैले मेरो घर नजिकैको साइबर क्याफेमा गएर यो शब्द गुगल गरें र त्यहाँबाट मैले यी विषयवस्तु बुझ्ने मौका पाएँ । यस अघि मैले केवल समाजमा बुझाइने महिला र पुरूषको परिभाषा अनि त्यसमा कोही अटाएन वा त्यस अनुरूप कसैको लैङ्गिक अभिव्यक्ति छैन भने उसलाई गालीगलौज गर्ने र अवहेलना गर्ने शब्दहरू मात्र सुनेको थिएँ । यो ज्ञान हासिल गरिसकेपछि मेरो मनमा रहेको कुण्ठा, द्वन्द र अन्योलता हट्दै गए । क्रमशः मैले आफू जस्तै लैङ्गिक पहिचान भएका अरु व्यक्तिहरू चिन्न, साथी वनाउन र घुलमील हुन थालेपछि मेरो मनोभावनात्मक स्वास्थ्य पनि सुध्रिँदै गयो ।

त्यसो भए तापनि अरु व्यक्तिहरूबाट हुने विभिन्न किसिमका घृणा, लाञ्छना र टिकाटिप्पणीका कारण म मेरो वास्तविक लैङ्गिक पहिचान वारे खुलेर व्यक्त गर्न सक्ने अवस्था थिएन । म त्यस बेला १३/१४ वर्षको थिएँ । मेरो लागि मेरो शैक्षिक भविष्य, मेरो घरपरिवारको स्वीकार्यता र यदि मेरो वास्तविक पहिचान थाहा पाएमा म घरनिकाला भएको भए वा विद्यालय निकाला भएको भए लगायतका अदृश्य डरहरू समेत थियो ।

अन्ततः कक्षा १० एस.एल.सी. उत्तीर्ण गरिसकेपछि मैले मेरो वास्तविक लैङ्गिक पहिचानको अनुसार नै जीवनयापन गर्ने र आफ्नो पहिचान स्थापना गर्ने निर्णय लिएँ । मैले आफ्नो लागि आफ्नो लैङ्गिक पहिचानको प्रतिनिधित्व गर्ने नाम 'रुक्शना' छानें र त्यसै गरि आफूलाई महिला भनी चिन्नाउन थालें ।

मलाई यस अघि गलत ढङ्गले चिनीरहेका मेरो साथी, आफन्त, परिवार लगायतका व्यक्तिहरूलाई मेरो वास्तविकता स्वीकर्न गाह्रो भयो र म विभेद, लाञ्छना र घृणाका शिकार हुनुपर्यो । झण्डै सात वर्ष अघिको त्यो समय देखि आज सम्म मेरो जीवनमा मलाई मेरो वास्तविक पहिचानमा स्वीकार्ने र अपनाउने व्यक्तिहरू मेरो साथमा छन् । र मैले आफ्नो समाज, टोलछिमेक र परिवारमा आफ्नो वास्तविक पहिचान अनुसार आफ्नो परिचय स्थापित गर्न सफल भएको छु ।

रुक्शना



५. तर आफ्नो लैङ्गिक पहिचान अनुसारको परिचय कानूनी रूपमा भने स्थापित गर्न अझै पनि सकिरहेको छैन । म निवेदक मेरो लैङ्गिक पहिचानकै कारण भोग्नु परेको अन्याय सम्बोधनका लागि मैले गरेका प्रयास र विपक्षीहरूको प्रतिक्रिया यस प्रकार छ :

५.१ कक्षा १० एस.एल.सी. उत्तीर्ण भइसकेपछि म १६ वर्ष पुगिसकेको र नागरिकता बनाउने उमेर पनि भइसकेको हुनाले नागरिकता बनाउन तर्फ लागें । मैले वास्तविक पहिचान अनुसार नै मेरो नागरिकता प्राप्त गर्न खोजें । मिति २०७२/०३/११ मा मैले नागरिकता प्राप्त गरें तर तत्कालिन अधिकारीहरूले प्रचलित कानूनी व्यवस्थाका कमीकमजोरी देखाउदै नागरिकतामा मेरो वास्तविक लैङ्गिक पहिचान 'महिला' उल्लेख गरि जारी गर्न मानेनन् । मैले नचाहदा नचाहँदै अधिकारीहरूले मेरा उक्त प्रमाण पत्रहरूमा लैङ्गिक महलमा 'अन्य (Others)' उल्लेख गरि जारी गरे ।

५.२ त्यस पश्चात् मैले मेरो +२ अध्ययनका लागि च.नं. ६३/०७२/०७३ मिति २०७२/०५/२३ मा मलाई शिशु अवस्थामा राखिदिएको नाम र मेरो आफ्नो नाम 'रुक्शना' एकै व्यक्तिको हो भन्ने व्यहोरा उल्लेख गरेको सिफारिस आफ्नो वडा कार्यालयबाट प्राप्त गरें । उक्त सिफारिस सहित मैले +२ को लागि तत्कालीन Higher Secondary Education Board (HSEB) को फारमहरू भरें र मेरो +२ दुई वर्ष निर्धक अध्ययन अध्यापन गर्न पाएँ । त्यसरी नै मेरो +२ का प्रमाणपत्रहरू मेरो आफ्नो नाम अनुसार बने । +२ कक्षा ११ र १२ को अभिलेखमा पनि मेरो लिङ्गको महलमा "महिला" नै उल्लेख छ । (परिक्षा बोर्डको मिति २०७७/१०/२५ को च.नं. ७४७ द्वारा प्रमाणित गरिएको ) सो दुई नाम गरेको एउटै व्यक्ति रहेको व्यहोराको सिफारिस हस्तलिखित भएको कारणले कम्प्युटर छपाईको स्पष्ट अक्षरमा पुनः च.नं. ४५७ मिति २०७५/०८/१६ मा सोही व्यहोराको सिफारिस लिएँ । तर वास्तवमा मलाई यसरी दुई नामको एकै व्यक्ति रहेको सिफारिस चाहिएको होइन । मलाई त्यसरी दुईवटा नामले चिनिनु नै थिएन र छैन । मलाई मेरो लैङ्गिक पहिचानको सहि प्रतिनिधित्व गर्ने नाम 'रुक्शना'ले मात्र चिनिनु छ । मेरो कागजप्रमाणहरू आफ्नो लैङ्गिक पहिचान अनुसार संसोधन नहुँदा यस्तो सिफारिस लिनुपर्ने अवस्था सृजना भएको हो ।

५.३ त्यसपछि म उच्च शिक्षा अध्ययनका लागिं त्रिभुवन विश्वविद्यालय अन्तरगतको त्रिचन्द्र बहुमुखी क्याम्पसमा मानविकी संकायको स्नातक तह समाजशास्त्र र भाषाविज्ञान मुख्य

त्रक्षीनी



विषय छनोट गरि मिति २०७४/०८/२५ मा भर्ना भएँ । मेरो रोल नम्बर १२९/०७४ हो । प्रथम वर्षको अध्ययन पूरा गरि वार्षिक परिक्षा दिएँ र स्नातक दोश्रो वर्षमा समेत भर्ना भएँ । दुवै तहको भर्ना, मासिक र परिक्षा शुल्क गरि करिब चौध हजार एक सय साठी रूपियां (रु. १४,१६०/-) रुपैया समेत खर्च गरें । केही समय पछि क्याम्पसले मलाई त्रिभुवन विश्वविद्यालय रजिष्ट्रेशन फारम (TU Registration Form) भर्नुपर्ने जानकारी गरायो । उक्त रजिष्ट्रेशन फारम भरी आवश्यक शैक्षिक प्रमाणपत्रहरू संलग्न गरि मिति २०७४/११/२५ गते क्याम्पस प्रशासनमा बुझाएँ । क्याम्पसको दर्ता नं: १२९/०७४ मा उक्त फारम दर्ता छ । तर करिव ४ महिना पछि मिति २०७५/०३/२६ मा क्याम्पस प्रशासनले मलाई मैले पेश गरेको उक्त रजिष्ट्रेशन फारममा संलग्न कक्षा १० र १२ को शैक्षिक प्रमाणपत्रहरूमा मेरो नाम र लैङ्गिक विवरण नमिलेको बताउदै यस्तो फारमलाई क्याम्पसले त्रिभुवन विश्वविद्यालय परिक्षा नियन्त्रण कार्यालय पठाउन नसक्ने जानकारी गरायो । मैले क्याम्पस प्रशासनलाई आफू पारलैङ्गिक महिला भएको बताउदै नागरिकता तथा शैक्षिक प्रमाण पत्रमा नाम र लैङ्गिक विवरण फरक पर्नुको कारण बारे विस्तृतमा जानकारी गराएँ । त्यसैगरि मैले त्यस्तो फरक फरक नामका सम्बन्धमा ललितपुर म.न.पा. वडा नं. १६ को वडा कार्यालयले गरिदिएको सिफारीस पत्र उक्त रजिष्ट्रेशन फारमकासाथ संलग्न रहेको देखाए । यसका साथै मैले यस सम्बन्धमा सम्मानित सर्वोच्च अदालतबाट लैङ्गिक पहिचानका विषयक मुद्दामा भएको आदेशहरू बारे समेत जानकारी गराउदै फारमलाई परिक्षा नियन्त्रण कार्यालयमा पठाईदिन अनुरोध गरें । तर क्याम्पस प्रशासनबाट मेरो अनुरोधको सुनुवाई भएन । बरु उसले मलाई म स्वम् परिक्षा नियन्त्रणको कार्यालयमा गई बुझाउनु भनि उक्त फारम सहित निम्नलिखित व्यहोरा भएको एउटा पत्र थमायो ।

*"यस क्याम्पस अन्तरगत शैक्षिक वर्ष २०७४/७५ को मानविकी समुह, स्नातक तहमा अध्ययन गर्ने छात्रा श्री रुक्शना कपाली को त्रि.वि. दर्ता फारम थान एक पठाईएको छ, आवश्यक शुल्क लिई बुझिदिनु भई त्रि. वि. दर्ता नंम्बर पठाई दिनुहुन अनुरोध छ " उल्लेख छ ।*

५.४ म उक्त पत्र पाएकै दिन परिक्षा नियन्त्रण कार्यालय बल्खु गएँ । परिक्षा नियन्त्रकज्यूलाई भेटी उक्त रजिष्ट्रेशन फारम सम्बन्धी सम्पूर्ण जानकारी गराउदै रजिष्ट्रेशन फारम बुझिदिन अनुरोध गरें । परिक्षा नियन्त्रकले उक्त मैले पेश गरेका रजिष्ट्रेशन फारम, नागरिकता र शैक्षिक प्रमाणपत्र लगायतका कागजात अध्ययन गरे र शैक्षिक प्रमाणपत्रमा नाम फरक परेको व्यक्तिले रजिष्ट्रेशन फारम भर्न पाउने बिषयमा कुनै कानून नरहेको बताए । साथै

त्रक्षीनी



त्र२केगो

उनले यसबारे अफिसमा छलफल गरे पछि मात्र भन्न सक्ने बताउदै केहिदिन पछि बुझ्न आउनु भने । मिति २०७४/११/२९ गते म पूनः उक्त परिक्षा नियन्त्रण कार्यालय गई र रजिष्ट्रेशन फारम बुझिपाउँ भनेर लिखित निवेदन दिए । तर उक्त कार्यालयका कर्मचारीहरूले उक्त निवेदनलाई प्राज्ञिक समुहको वैठकमा राखी छलफल गर्ने र जे जस्तो निर्णय हुन्छ जानकारी गराउने बताउदै मलाई केही दिन पछि बुझ्न आउनु भने । रजिष्ट्रेशन फारम बारे सकारात्मक निर्णय हुने आशामा मैले अध्ययनलाई जारी राखे वार्षिक परिक्षा दिए र स्नातक दोश्रो बर्षमा समेत भर्ना भए । रजिष्ट्रेशन फारमका बारेमा वुझ्न करिव ५/६ पटक पटक परिक्षा नियन्त्रण कार्यालय गए । परिक्षा नियन्त्रण कार्यालयका कर्मचारीहरूले उक्त विषयमा निर्णय भैनसकेको बताए । उनिहरूले छिट्टै निर्णय हुने बताउदै मलाई वुझ्न आउदै गर्नु भने । तर लामो समयसम्म पनि कुनै निर्णय नभए पछि मैले पछिल्लो पटक नेपाल संवत् ११४० दिल्ला ३ (मिति २०७७/०३/१०) मा उक्त रजिष्ट्रेशन फारमका सम्वन्धमा भएको कारवाहीका जानकारी पाउँ भनि हुलाक मार्फत् परिक्षा नियन्त्रण कार्यालयलाई पत्र पठाएकोमा कुनै जवाफ प्राप्त भएन । मिति २०७७ फागुन २३ मा उक्त कार्यालय गएर यस विषयमा बुझ्न जाँदा रजिष्ट्रेशन शाखाले यस विषयमा कुनै निर्णय भएको छैन भनि फर्काए । मैले यस विषयमा दिएको निवेदनको फाइलमा त्रिभुवन विश्वविद्यालयको कानूनी सल्लाहकारको एउटा पत्र भने पाएँ । उक्त पत्रमा मेरो कक्षा १० को प्रमाणपत्रहरू सच्याएमा मात्र यस विश्वविद्यालयले रजिष्ट्रेशन गर्न सक्ने व्यहोराको थियो । यसरी मेरो रजिष्ट्रेशन फार्म स्विकार गरि त्रि.वि. दर्ता नं. प्राप्त नहुँदा मेरो स्नातक अध्ययन प्रभावित भएको छ । त्रि.वि. रजिष्ट्रेशन फारम दर्ता नहुँदा र दर्ता नं. नपाउदा कलेज पढ्न जानु र परिक्षा दिनुको कुनै अर्थ नहुने भएकाले म स्नातक तहको अध्ययनलाई विचमै छोड्न वाध्य भएको छु ।

५.५ भाषाविज्ञानमा रूचि भएको हुनाले उच्च शिक्षा सम्बन्धीको यो मुद्दा किनार नलाग्दा सम्म आफूले एउटा भाषा सिक्ने निर्णय गरि भनि म मिति २०७६/०९/२२ गते विश्वभाषा क्याम्पस, प्रदशनीमार्ग, काठमाण्डौंमा भर्ना हुन गएँ । भर्ना हुन चाहिने कागज प्रमाण र प्रक्रियाका बारेमा त्यहाँका कर्मचारीहरूसँग वुझ्नुका साथै मैले आफ्नो शैक्षिक तथा नागरिकता लगायतका प्रमाण पत्रमा नाम लगायतको व्यक्तिगत विवरण समान नरहेको र त्यस्तो समान नहुनुको सम्पूर्ण कारणबारे जानकारी गराए । निज कर्मचारीहरूले त्यस्तो शैक्षिक प्रमाण पत्रका आधारमा क्याम्पसमा भर्ना लिन नसकिने भनि मौखिक रुपमा जानकारी दिए । निज कर्मचारीहरूले उक्त क्याम्पसमा भर्ना लिनको लागि कक्षा १० को

त्र२केगो



प्रमाणपत्रहरूलाई आधार मान्ने भएकाले मलाई उक्त प्रमाणपत्रहरूमा उल्लेखित नाम र लैङ्गिक विवरण अनुसार नै सम्बोधन हुने व्यहोरा बताए । यसार्थ उक्त क्याम्पसमा भाषा अध्ययन गर्नको लागि आफ्नो वास्तविक पहिचान भन्दा फरक लैङ्गिकता र नाम अनुसार चिनिनुपर्ने बाध्यता सृजना भयो । त्यसपछि म फारम नै नबुझाइकन फर्कें ।

५.६ एकातर्फ त्रिभुवन विश्वविद्यालयमा वकालत जारी थियो भने अर्को तर्फ मैले मेरो एस.एल.सी. मार्कसिट लगायतका माध्यामिक तहका शैक्षिक प्रमाण पत्रहरूमा आफ्नो वास्तविक लैङ्गिक पहिचान अनुसारको विवरण उल्लेख गरि संसोधनका लागि प्रयास गरें । यसका लागि मैले नेपाल संवत् ११३९ बछला ९ (मिति २०७६/०१/३०) मा राष्ट्रिय परिक्षा बोर्डमा निवेदन दर्ता गरें । त्यसका साथै मैले सोही दिन रसिद नं २९५९८८ रहेको रु. २००/- (रुपियाँ दुई सय)को रसिद काटें । निवेदन माथिको कारवाही बुझ्न महिनौसम्म बोर्डको कार्यालय धाँए । करिव ७ महिना पछि मलाई उक्त बोर्डबाट च.न. ९५४, मिति २०७६/०९/०८ को मेरो माग बमोजिम मेरो नाम सच्याउन नमिल्ने निम्नानुसार व्यहोराको पत्र थमाएको उल्लेख छ :

" ..... *तपाईले आफ्नो नाम र लिङ्ग सच्याई पाउँ भनि मिति २०७६/०१/३० मा बोर्डका अध्ययक्षज्यूबाट परिक्षा नियन्त्रण कार्यालयलाई कक्षा १० को फाईल पेश गर्ने भनि तोक आदेश भएको र उक्त कार्यालयबाट बोर्डबाटै आवश्यक निर्णय हुनुपर्ने भनि मिति २०७६/०२/०३, च.नं. ११३७ को पत्रबाट बोर्डको सचिवालयमा प्राप्त भई उक्त विषय मिति २०७६/०५/१९ गतेको बोर्ड बैठकमा पेश हुँदा परिक्षा नियन्त्रण कार्यालय कक्षा १० मा भएको अभिलेखमा तपाईको नाम ............. उल्लेख भएको पाइएकोले तपाईको माग बमोजिम नाम सच्याउन नमिल्ने व्यहोरा निर्णयानुसार जानकारीलागि अनुरोध छ* " ।

अन्ततः मैले नेपाल संवत् ११४१/०४/०७ (मिति २०७७/१०/११) मा RD773067121NP टिकट नं रहेको हुलाक मार्फत् मैले प्रमाणपत्रहरू सच्याउन तिरेको शुल्कको रसिद (रसिद नं २९५९८८) सहित प्रवेशिका परीक्षा प्रमाणपत्र र लब्धांक पत्रको सक्कलै प्रति संलग्न गरि बोर्डको अध्यक्षलाई आफ्नो निर्णय पुनरावलोकन गर्न पत्राचार गरें । टेलिफोनबाट सोधपुछ गर्दा उक्त पत्र मिति २०७७ माघ १५ गते दर्ता भएको र दर्ता नम्बर ६३४ रहेको जानकारी पाएँ । उक्त निवेदनको कुनै जवाफ मलाई आएन ।



५.७ अहिले मेरो शैक्षिक भविष्य नै अन्योलमा परेको छ । न उक्त प्रमाणपत्र संसोधन हुन्छ, न संसोधन विना उच्च शिक्षामा निरन्तरता पाउन सकिन्छ । त्यति मात्र नभएर एस.एल.सी. प्रमाणपत्रहरू पेश गर्न आवश्यक रहेको कुनै पनि सेवा सुविधा तथा शैक्षिक र तालिम कार्यक्रमहरूबाट म वञ्चित हुन बाध्य छु । मैले विश्वभाषा क्याम्पसमा एस.एल.सी. प्रमाणपत्रहरू नसचिएकै कारणले भर्ना पाउनबाट वञ्चित हुने अवस्था पछि संस्कृत विश्वविद्यालयले प्रदान गर्दै आएको संस्कृत भाषा (प्राक् शास्त्री) कक्षा, बौद्ध परियत्ती शिक्षा संघले प्रदान गर्दै आएको पालि भाषा प्रशिक्षण, र CTEVT द्वारा प्रदान गरिने तालिम तथा शैक्षिक कार्यक्रमहरू वारे समेत वुझ्ने क्रममा त्यहाँ भर्ना हुन एस.एल.सी. प्रमाणपत्रहरू पेश गर्न पर्ने भएकाले ती कार्यक्रमहरूमा भर्ना हुने इच्छा हुँद हुँदै पनि भर्ना हुन गएको छैन, र आफ्नो प्रमाणपत्र र परिचयपत्र आफ्नो वास्तविक पहिचान अनुसार नरहेकाले मैले ४ वर्ष देखि ठाउँ ठाउँमा हण्डर खान परेकोले यो त्रास उत्पन्न भएको हो ।

५.८ उल्लेखित समस्या समाधान गरि पाँउ भनि मैले नेपाल संवत् ११३८ गुंला २ (मिति २०७५/०४/२८) मा माननीय शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रीज्यूको नीजि सचिवालयमा निवेदन दिएँ । निवेदन उल्लेखित मितिको दर्ता नं. ३९ मा दर्ता छ । उक्त निजी सचिवालयबाट निवेदन माथि कुनै कारवाही नभए पछि सोही विषयमा मैले नेपाल संवत् ११३९ सिल्ला २ (मिति २०७५/१०/२४) मा दर्ता नं. १९३ र १९४ रहेका २ वटा निवेदन दिएँ । यी निवेदनहरू दायर गरे पश्चात उक्त मन्त्रालयको उच्च शिक्षा शाखाले च.नं. ६७६, मिति २०७५/१२/२० मा नेपालका सम्पूर्ण विश्वविद्यालयहरू र च.नं. ७१०, मिति २०७६/०१/०४ मा त्रिभुवन विश्वविद्यालयलाई पत्र लेखी उक्त मेरो निवेदनमा उल्लेखित विषयमा आवश्यक कदम चाल्नु भनि मैले वुझाएको पत्र एवं कागजातहरू सहित पत्राचार सम्म गरेको देखिन्छ । सर्वप्रथम त त्यसरी मेरो कागजातहरू सबै विश्वविद्यालयमा पठाउँदा मेरो गोपनीयताको खयाल गरिएन । मैले शिक्षा मन्त्रालय सम्बन्धित निकाय भएकाले मेरो कागजातहरू वुझाएको थिएँ तर असम्वन्धित सबै विश्वविद्यालयमा मेरो कागजात समेत समावेश गरि पठाउँदा मेरो गोपनीयताको आदर गरिएन ।मन्त्रालयको उक्त पत्र अनुसार त्रिभुवन विश्वविद्यालय समेतका उल्लेखित विश्वविद्यालयहरूबाट उक्त समस्या सम्बोधनका सम्बन्धमा कुनै कामकारवाही भएको भन्ने बारेमा हालसम्म मैले कहिँकतैबाट कुनै जानकारी पाएको छैन । त्यसैगरि त्रिभुवन विश्वविद्यालय उपकुलपतीको कार्यालयले मन्त्रालयको उल्लेखित पत्रको हवाला दिदै च.नं. ४३१/०७५-०७६, मिति २०७६/०१/१० मा परिक्षा नियन्त्रण कार्यालयलाई पत्राचार गरेको देखिन्छ । उक्त पत्रमा पारलैङ्गिक महिलालाई



रजिष्ट्रेशन गर्न समस्या परेको भन्ने निवेदन व्यहोराका सम्बन्धमा के कसो हो ? के कसो गर्न सकिन्छ सोको जानकारी शिक्षा, विज्ञान तथा प्रविधि मन्त्राललाई गराई उपकुलपतीको कार्यालयलाई समेत जानकारी गराउनु भन्ने उल्लेख छ । तर उक्त पत्रवारे परिक्षा नियन्त्रण कार्यालयले उक्त मेरो समस्याका विषयमा के कस्तो कारवाही गर्यो वा उक्त मन्त्रालय एवं उपकुलपती कार्यालयलाई के कस्तो जानकारी दिएको छ भन्ने बारेमा उक्त उपकुलतीको कार्यालय लगायतका कुनै पनि कार्यालयले मलाई आज सम्म कुनै जानकारी दिएका छैनन् ।

५.९ त्यसपछि मैले जन्म दर्ता संसोधनका लागि ललितपुर महानगर वडा १६ मा नेपाल संवत् ११३९ चौला २९ (मिति २०७६/०१/१९) का दिन दर्ता नं ९१८ निवेदन दिएँ । त्यस दिन उक्त वडा कार्यालयले मलाई आफू पारलैङ्गिक भएको कुनै प्रमाण नरहेको र चिकित्सक प्रमाणपत्र आवश्यक पर्ने मौखिक जानकारी दिए । त्यसपछि मैले यस विषमयमा भएका केही सर्वोच्च अदालतका फैसलाहरूवाट लैङ्गिक पहिचानलाई आत्मनिर्णयको अधिकार रहेको र यसमा अरु व्यक्ति, समाज, राज्य र कानूनले निर्धारण गर्न नमिल्ने र कुनै व्यक्तिको लैङ्गिक अनुभूती के हो भन्ने विषय कुनै चिकित्सकले मापन गर्न नसक्ने भनि भएको नजिर सिद्धान्त बारे जानकारी गराएँ । वडा कार्यालय अन्योलमा परेपछि मेरो निवेदनमा के कारवाही गर्ने भनि उक्त वडा कार्यालयले ललितपुर महानगरपालिका पञ्जिकरण शाखालाई मिति २०७६/०१/२७ मा च.नं. १०७१/०७५/७६ मार्फत् पत्राचार गरि स्पष्ट निर्देशन माग गरे । उक्त लिखितमा वडा कार्यालयले "मैले आफू पारलैङ्गिक महिला भएको कुनै प्रमाण संलग्न नगरेको" समेत उल्लेख गरे । महानगरको पञ्जिकरण शाखाले राष्ट्रिय परिचयपत्र तथा पञ्जिकरण विभागलाई मिति २०७६/०२/०२ मा च.नं. ७३६२/०७५/७६ मार्फत् पत्राचार गरि निर्देशन माग गरेको गरे । तत् पश्चात् राष्ट्रिय परिचयपत्र तथा पञ्जिकरण विभागले मिति २०७३/०२/०९ मा च.नं. ५७२/०७५/७६ मार्फत् ललितपुर महानगरपालिकालाई निर्देशन दिए । उक्त निर्देशनका आधारमा मिति २०७६/०२/१० मा उक्त महानगरपालिकाका प्रमुख प्रशासकिय अधिकृतले निर्णय गरि मिति २०७६/०२/१२ मा च.नं. ७६०२/०७५/०७६ मार्फत् उक्त वडा कार्यालय पत्राचार गरेको र सो पत्राचारका आधारमा वडा कार्यालयलयले मलाई मिति २०७६/०२/१९ मा जन्मदर्ताको संसोधित प्रतिलिपि उपलब्ध गराएको छ । तर यस संसोधित प्रतिलिपिमा मैले केवल आफ्नो नाम 'रुक्शना कपाली' मात्र उल्लेख गरि सच्याउन पाएँ । मेरो नागरिकता प्रमाणपत्रमै मेरो लैङ्गिक विवरण 'अन्य' उल्लेख गरिएको हुनाले, मैले मेरो वास्तविक लैङ्गिक पहिचान



अनुसार "महिला" उल्लेख गर्न भने पाइनँ । तसर्थ मैले नेपाल संवत् ११४१/०४/१३ (मिति २०७७/१०/११) मा ललितपुर महानगरपालिकाको स्थानीय पञ्जिकाधिकारीलाई जन्म दर्ता प्रमाणपत्रमा लैङ्गिक विवरण सच्याइपाउँ भनी RD773067285NP टिकट नं रहेको हुलाक मार्फत् जन्म दर्ताको सक्कलै प्रति समेत संलग्न गरि पत्राचार गरें । टेलिफोनबाट सोधपुछ गर्दा उक्त पत्र मिति २०७७ माघ १३ गते दर्ता भएको र दर्ता नम्बर १०१४६ रहेको जानकारी पाएँ । यसमा कुनै थप कारवाही भएको जानकारी छैन ।

५.१० मैले जन्म दर्ता संसोधन गर्नका निम्ति नेपाल संवत् ११३९ चौला २९ (मिति ०७६/०१/१९) मा दिएको निवेदनमा मलाई लैङ्गिक तटस्थ शब्दले सम्बोधन गर्न आग्रह गरेको थिएँ । यसको कारण के हो भन्दा, मेरो नागरिकता प्रमाणपत्रमा "अन्य" उल्लेख भएकै कारण मलाई मानवता जनाउने शब्द प्रयोग गरिँदैन । मलाई स्मरण छ कि मेरो नागरिकता प्रमाणपत्र बनाउने फारममा पनि सम्वन्धित अधिकारीले छोरा/छोरी काटेर 'अन्य', नाति/नातिनी काटेर 'अन्य' उल्लेख गरिदिएको थियो । मेरो नागरिकता प्रमाणपत्रमा 'अन्य' उल्लेख हुनुको कारणले नै अधिकांश सरकारी कार्यालयहरूमा मलाई Sir वा Madam दुवै भन्नु नमिल्ने जस्ता टिप्पणी पाएको थिएँ जब कि मेरो वास्तविक लैङ्गिक पहिचान त महिला हो । मेरो लैङ्गिक पहिचान महिला हुँदा हुँदै पनि नागरिकता प्रमाणपत्रका कारण 'अन्य'का रूपमा चिनिन बाध्य भएको छु । 'अन्य' भनेको त छोरा/छोरीको पर्यायवाची शब्द समेत होइन । मलाई बारम्बार यसरी सम्बोधन हुनुपर्दा अपमान र मेरो आत्मसम्मानमा चोट पुगेको छ । मेरो पहिलेको जन्म दर्तामा फलानो नाम गरेको फलानाहरूको छोरी/छोरीको जन्म मिति यतिमा हुने भनी वाक्यमा लेखिएको हुनाले फेरी मलाई जन्म दर्ता संसोधन गर्दा छोरा/छोरी काटेर "अन्य"को जन्म भएको भनी लेखिदिने हो कि जस्तो लागेर बरु कम्तिमा एउटा मानवकै रूपमा व्याख्या होस् भनी लैङ्गिक तटस्थ शब्द "सन्तान"ले सम्बोधन गर्न आग्रह गरेको थिएँ । तर अहिले त जन्म दर्ता प्रमाणपत्रको ढाँचा नै परिवर्तन भएको रहेछ, त्यसैले जन्म दर्ता प्रमाणपत्रका लागि त यो सादर्भिक त भएन तर पनि आफ्नो वास्तविक लैङ्गिक पहिचान 'महिला' हुँदा हुँदै नागरिकता प्रमाणपत्रमै महिला पुरुष वाहेक अरु केही भनी परिभाषित हुनुपर्ने नीतिगत कानूनी बाध्यता हुँदा जीवनको पाइला-पाइलामा नै अपमानित हुनुपरेको छ ।

५.११ त्यसपछि मैले कक्षा ८ को DLE प्रमाणपत्रमा संसोधन गर्न शिक्षा विकास तथा समन्वय इकाइ, ललितपुरमा मिति २०७६/०३/०३ मा दर्ता नं ११४८ निवेदन दिएँ ।



त्यहाँबाट मैले कक्षा ८ उत्तीर्ण गरेको विद्यालयमा अभिलेख सच्याएर उक्त व्यहोरा खुलेको सिफारिस ल्याउन भनियो । मैले कक्षा ८ उत्तीर्ण गरेको इडेन गार्डेन आवसीय माध्यमिक विद्यालयमा उनीहरूको अभिलेख सच्याई सो बमोजिमको सिफारिस गर्न निवेदन दिएँ । मिति २०७६/०३/०३ उल्लेख भएको च.नं. २०७६/०१९/०३ को सिफारिस प्राप्त गरें र शिक्षा विकास तथा समन्वय इकाइ, ललितपुरमा बुझाएँ । त्यसपछि मैले संसोधित कक्षा ८ को DLE प्रमाणपत्र पाएँ । त्यहाँ पनि मैले आफ्नो नाममा मात्र पाउन सकें तर लैङ्गिक विवरण भने 'अन्य' उल्लेख रहेको कारणले उक्त प्रमाणपत्रमा मलाई 'अन्य'को रूपमा सम्वोधन गरियो ।

*"This is to certify that Mr./Miss/Others Rukshana Kapali, son/daughter/others of Mr. ............. has PASSED the annual examination of Class Eight in the year 2069 B.S. (2013 A.D.) According to the office record, he/she/others studied this grade in ............ and the school record shows that he/she/others date of birth is ........"*

५.१२ उल्लेखित सबै कार्यालयहरूको जवाफबाट मेरो नागरिकतामा नै समस्या रहेको देखिएकोले मैले नागरिकता संसोधनका लागि प्रयास गरें । मैले मिति २०७६ फागुन २२ गते वडा कार्यालयको सिफारिस बनाएँ र सोही मितिमा उक्त सिफारिस सहित जिल्ला प्रशासन कार्यालय ललितपुरमा नागरिकताको लैङ्गिक विवरण संसोधन गरि "महिला" कायम गरि पाउँ भनि निवेदन दिएँ । सो दिन मेरो सिफारिस जिप्रकाले लिंन इन्कार गरियो र म फर्कें । सोही सम्बन्धमा मैले नेपाल संवत् ११४० चिल्ला २९ (मिति २०७६ चैत ३) मा RD765381069NP टिकट नं रहेको हुलाक मार्फत् सम्बन्धित विषयको वर्णन गरि नागरिकतामा लैङ्गिक विवरण 'अन्य'बाट 'महिला' उल्लेख गरि सच्याइपाउँ भनी गृह मन्त्रालयको नागरिकता तथा राष्ट्रिय परिचयपत्र व्यवस्थापन शाखामा निवेदन पठाएँ । उक्त निवेदनमा कुनै सुनवाई भएन । मैले फेरी मिति २०७७ असार १० गते RD765802274NP टिकट नं रहेको हुलाक मार्फत् प्रमुख जिल्ला अधिकारी, ललितपुरलाई पत्राचार गरें । उक्त पत्राचारको कुनै जवाफ आएन । मैले पुनः मिति २०७७ असार २९ मा प्रमुख जिल्ला अधिकारीलाई मैले माग गरेको संसोधन गर्न मिल्ने कि नमिल्ने सम्वन्धमा लिखित जवाफ पाउँ भनी पत्राचार गरें । उक्त पत्राचारको पनि कुनै जवाफ आएन । मैले पुनः मिति २०७७ भाद्र २५ मा जिप्रका ललितपुरका सूचना अधिकारीलाई सम्बोधन गर्दै RD770762768NP टिकट नं रहेको हुलाक मार्फत् मैले विगतमा गरेका पत्राचारहरू सम्वन्धी के कस्तो जानकारी मागी पत्राचार गरें । उक्त निवेदनको पनि जवाफ आएन । केही हुन्छ कि भनेर नागरिक एप मार्फत् मैले जस

रुक्शना



विषयमा गुनासो राखें । मिति २०७७ माघ २२ गते मलाई गृह मन्त्रालयबाट फोन आयो र फोन गर्ने व्यक्तिले मलाई प्रमुख जिल्ला अधिकारीसँग भेटेर कुरा राख्न सुझाव दिए र उनी आफैले नै अधिकारीलाई सम्पर्क गरि म आउने खबर दिने भनि बताए । मिति २०७७ माघ २३ मैले प्रमुख जिल्ला अधिकारीसँग भेट गरें । उनले मेरो माग अनुसार नागरिकता सच्चिने कुरा गरे र कोठा नं १८ मा फोन गरे । तर कोठा नं १८ बाट भने यो गृह मन्त्रालय नै पठाउन पर्ने र मन्त्रीपरिषदले निर्णय गर्ने बताए । त्यसपछि मलाई फेरी मेरो वडा कार्यालयबाट मेरो नागरिकता प्रमाणमत्रको लिङ्गको महलमा "अन्य" जनेको र सो सच्याई "महिला" उल्लेख हुनुपर्ने मेरो माग रहेको व्यहोरा जनाई सिफारिस ल्याउन भनियो । मैले सोही दिन वडा कार्यालय गई उक्त व्यहोराको च.नं. ९५७ रहेको सिफारिस प्राप्त गरें । उक्त सिफारिस, मिति २०७६ फागुन २२ को सिफारिस, नागरिकता प्रमाणपत्रको फोटोकपी र 'महिला' लैङ्गिक विवरण उल्लेख भएको राहदानीको फोटोकपी सँगै प्रमुख जिल्ला अधिकारीलाई सम्बोधन गरि नागरिकता संसोधनको व्यहोरा खुलाई निवेदन लेखें । सो दिन प्रमुख जिल्ला अधिकारी वाहिर गइसकेको हुनाले सहायक प्रमुख जिल्ला अधिकारीले मेरो निवेदनहरू राखे र मलाई सोमबार आउन अनुरोध गरे । सोमबार (२०७७ माघ २६ गते) जिल्ला प्रशासन कार्यालय गएर कुरा बुझ्दा मेरो निवेदन गृह मन्त्रालय पठाउनुपर्ने भनि बताइयो । उक्त दिन प्रमुख जिल्ला अधिकारीको कक्षामा निकै भीड भएको र आधा दिन त्यहाँ बितिसकेको भएर अरु काम सकाउन मैले मेरो फोन नम्बर छोडेर गएँ । सोही दिन बेलुकी मलाई जिप्रकाबाट फोन गरि मिति २०७६ फागुन २२ मा वडा कार्यालयबाट पाएको सिफारिस अघिल्लो आर्थिक वर्षको हुनाले अब मान्य नरहेको र सोही प्रकारको सिफारिस पुनः वडा कार्यालयबाट ल्याउन भनि भने । मैले त्यसै अनुसार मिति २०७७ माघ २७ गते पुनः वडा कार्यालयबाट सिफारिस प्राप्त गरि जिल्ला प्रशासन कार्यालयमा पठाएँ । सो सिफारिस मिति २०७७ माघ २८ मा जिप्रका पुगेको खबर आयो ।

५.१३ मैले दुईवटा राहदानी लगेको छु । मेरो पहिलो मिति 16 Jan 2017 मा जारी गरिएको थियो । उक्त राहदानीमा मैले लैङ्गिक विवरण 'F' (महिला) उल्लेख गरि पाएको थिएँ । म थुप्रै अन्तर्राष्ट्रिय सम्मेलनहरूमा सहभागी हुने अवशर पाएको छु र विदेश यात्रा आवतजावत भइरहन्छ । मेरो राहदानीको पानाहरू सकिएपछि मैले नयाँ राहदानीको लागि आवेदन दिएँ । तर त्यस बेला भने मेरो नागरिकतामा 'अन्य' उल्लेख भएकोले मैले 'महिला'मा आवेदन दिन नमिल्ने भनी आवेदन फारम बनाउने मान्छेले प्रतिप्रश्न गर्न थाले । मलाई क्यानेडामा आयोजना हुन लागेको सम्मेलनमा जानका लागि भिजा लिन हतार



पनि थियो । मिति 20 September 2018 मा अर्को राहदानी जारी भयो जसमा लैङ्गिक विवरण 'O' (अन्य) जनाइयो । अन्य उल्लेख गरेको राहदानी बोकी यात्रा गर्नुपरेको बेला देखि मेरो अन्तर्राष्ट्रिय यात्रामा जोखिमपूर्ण हुन पुगेको छ । अन्य उल्लेख गरेकै कारण मैले विभिन्न देशहरूमा भिजा पाउनबाट इन्कार भएको छ । महिला उल्लेख भएको राहदानी हुँदा जति सरलै यात्रा गर्न सकिन्थ्यो, अन्य उल्लेख भएको राहदानीबाट यात्रामा विभिन्न बाधा अड्चनहरू सृजना भए । सर्वप्रथम त त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा अन्य उल्लेख गरिएको राहदानी रीड हुँदैन । मैले विमानस्थलमा मेरो लैङ्गिकता बारे अनावश्यक केरकार समेत अनुभव गर्न पर्ने भएको छ । राहदानी रीड नभएकै कारण मलाई लाइनबाट अलग्याएर राखे र अर्को एउटा हस्तलिखित फारम भर्न लगाइन्छ । मैले यात्रा गरेको कुनै पनि देशमा यसरी अन्य उल्लेख गरिएको नागरिकता रीड हुँदैन । कतिपय देशहरूमा म 'M' र 'F' मध्ये के रुचाउँछु भनेर सोधिन्छ र म 'F' रुचाउँछु भन्ने उत्तर दिएपछि अध्यागमन डेक्सले अगाडी बढाउँछ । केही देशहरूमा केरकार गर्ने गर्ने, घण्टौं सम्म छेउमा उभिन लगाउने र उनीहरूको अधिकृतले मञ्जुरी दिएमा मात्र प्रवेश गराउने जस्ता अनुभवहरू छन् । ट्रान्जिटहरूमा पनि त्यस्तै अनुभव छ । अझ कतिपय देशहरूमा यस्तो विषयलाई अपराधिकरण गरिएको हुन्छ । त्यस्तो देशहरू भई यात्रा गर्दा सँधै त्रासपूर्ण मनस्थितिबाट गुज्रनुपर्छ । अन्य उल्लेख गरिएको राहदानीमा भिजा लाग्दा पनि थुप्रै समस्याहरू आउँछ र राजदूतावासबाट पटक पटक सम्पर्क गरिन्छ । भिजा आवेदनका लागि बायोमेट्रिक्स दिन जाँदा पनि अन्य उल्लेख भएको राहदानीले गर्दै समस्या आएको थियो । अन्ततः मैले अर्को राहदानीका निम्ति मिति २०७६/११/११ मा आवेदन दिएँ । त्यस आवेदनमा मैले मेरो पूरानो राहदानीको विवरण भनी मेरो पहिलो राहदानी (महिला उल्लेख गरिएको राहदानी)को विवरण सहित आवेदनमा 'F' लैङ्गिक विवरण उल्लेख गरें । तर उक्त आवेदन फारम फिर्ता आयो । अन्ततः मेरो अन्य उल्लेख गरिएको राहदानी रद्द गरिपाउँ भन्दै मैले नेपाल संवत् ११४१/०२/२९ (मिति २०७७ पुष २) मा महानिर्देशकज्यूलाई सम्बोधन गरि राहदानी विभागलाई ईमेल मार्फत् निवेदन पठाएँ । उक्त ईमेलको कुनै जवाफ नआएपछि मैले सोही पत्रलाई प्रिन्ट गरि मिति २०७७ पुष १३ मा RD772554666NP टिकट नं रहेको हुलाक मार्फत् विभागलाई पत्राचार गरें । मिति २०७७ माघ २२ गते स्वयं नै कान्तिपथ स्थित राहदानी विभागमा यस बारे बुझ्न गएँ कोठा नं १ मा गएर आफूले पठाएको पत्रको विवरण र हुलाक Domestic Tracking ले पुस १६ गते उक्त पत्र विभागमा पुर्याइएको बताउँदा सो प्रकृतिको निवेदन प्राप्त भएको तर दर्ता नगरिएको



मौखिक जवाफ पाएँ । सोही दिन निर्देशकज्यूसँग कुरा गर्न जाँदा उनले गर्न सक्ने केही छैन भनेर मलाई फर्काए ।

५.१४ मैले मतदाता परिचयपत्रको लागि आ  न दिँदा पनि 'महिला' उल्लेख गरि दिन पाइनँ किनभने मेरो नागरिकतामै अन्य उल्लेख गरिएको थियो । त्यसैले मैले मतदाता परिचयपत्रको लागि 'अन्य' उल्लेख गरि फारम बुझाउनपर्यो '। तर मतदाता परिचयपत्र मलाई प्राप्त हुँदा त्यसमा 'तेस्रो लिङ्गी' जनाइयो । मैले त्यस्तो लैङ्गिक विवरण उल्लेख गरेर फारम भरेकै थिइँन ।२०७४ सालको चुनावमा मत खसाल्नको लागि यस्तो परिचयपत्रले मलाई निकै प्रभाँव पार्यो । अझ निर्वाचन आयोगले सवैको मतदाता परिचयपत्रको विवरण अनलाइनमै उपलब्ध गराइदिएको थियो । यस कार्यले व्यक्तिको वैयक्तिक गोपनीयताको हक हनन भयो । अन्ततः मैले नेपाल संवत् ११४१/०२/२९ (मिति २०७७ पुष २) मा मतदाता परिचयपत्र तत्कालका लागि रद्द गरिपाउँ भनी श्री सचिवज्यूलाई सम्वोधन गरि निर्वाचन आयोगलाई ईमेल मार्फत् निवेदन पठाएँ । तर त्यसको कुनै जवाफ नआएपछि मैले सोही निवेदनलाई प्रिन्ट गरि मतदाता परिचयपत्रको सक्कलै प्रति टाँस गरि मिति २०७७ पुष १३ मा RD772554476NP टिकट नं रहेको हुलाक मार्फत् आयोगलाई पत्राचार गरेँ । तर मलाई अहिले सम्म आयोगबाट कुनै जवाफ आइसकेको छैन । टेलिफोनबाट सोधपुछ गर्दा उक्त पत्र मिति २०७७ पुस २० गते दर्ता भएको र दर्ता नम्बर ६२९ रहेको जानकारी पाएँ । मध्यावधि चुनावका लागि निर्वाचन आयोगले मतदाता नामावलीमा दावि विरोध कार्यक्रम ल्याएको खबर पाएपछि मिति २०७७ माघ २२ गते वडा कार्यालयमा बुझ्नको लागि गएँ, तर म्याद नाघिसकेको हुनाले महानगरपालिका कार्यालय जान आग्रह गरियो । महानगरपालिका कार्यालय जाँदा त्यहाँ पनि म्याद नाघिसकेको र जिल्ला निर्वाचन कार्यालयमा सम्पर्क राख्न भनियो । सोही दिन जिल्ला निर्वाचन कार्यालयमा जाँदा सम्बन्धित अधिकारीसँग भेट हुन सकेन । अन्ततः नेपाल संवत् ११४१/०४/२२ (मिति २०७७ माघ २६) मा मैले जिल्ला निर्वाचन कार्यालयका प्रमुखलाई मतदाता परिचयपत्रमा लैङ्गिक विवरण सम्बन्धि भनि पत्राचार गरेँ । उक्त पत्रमा मलाई मतदाता परिचयपत्रको लैङ्गिक विवरण न मेरो नागरिकता अनुसार न मेरो आफ्नो लैङ्गिक पहिचान अनुसार रहेको, आफ्नो पहिचान विपरीतको परिचय उल्लेख भएको मतदाता परिचयपत्र हुँदा आत्मसम्मानमा ठेस पुगेको, मैले आफूलाई 'महिला' नै भनेर चिन्ने चिनाउने गरेको व्यहोरा उल्लेख गरि मेरो मतदाता परिचयपत्रमा लिङ्गको महल सच्याई "महिला" उल्लेख गर्ने प्रक्रिया अगाडी वढाँइ पाउँ भनि निवेदन गरे ।



अरुणी

५.१५ मैले सन् २/७/२०२० मा आन्तरिक राजस्व विभाग भक्तपुरबाट स्थायी लेखा नम्बर प्राप्त गरेँ । उक्त लेखा नम्बर प्राप्त गर्न मैले भरेको आवेदन फारममा 'महिला' नै उल्लेख गरेको छु ।

५.१६ नेपाल संवत् ११४१/०४/०७ (मिति २०७७ माघ ११) मा RD773067237NP टिकट नं रहेको पत्र मार्फत् इडेन गार्डेन आवसीय माध्यमिक विद्यालयलाई S.No. 03/072/015 रहेको मेरो कक्षा १० को चारित्रिक प्रमाणपत्रमा नाम तथा लैङ्गिक विवरण सच्याउन उक्त चारित्रिक प्रमाणपत्रको सक्कलै प्रति पठाएको थिएँ । पत्रसँगै चारित्रिक प्रमाणपत्रको प्रतिलिपि जारी गर्नका लागि एक प्रति फोटो पनि संलग्न गरेको थिएँ भने त्यस वापत् कुनै शुल्क लागेमा खबर गर्न पनि अनुरोध गरेको थिएँ । हुलाकका अनुसार उक्त पत्र भोलि पल्ट नै सम्बन्धित विद्यालयमा पुगिसकेको छ । तर त्यस बारे मलाई कुनै खबर आएको छैन ।

५.१७ मिति 16 Jan 2017 मा जारी भएको मेरो पहिलो राहदानीमा 'महिला' उल्लेख रहेको; यात्रा गर्नका लागि उक्त राहदानीमा पाना सकिएतापनि राहदनीको म्याद बहालै रहेको हुनाले उक्त राहदानी नै मैले मेरो प्रमुख परिचयपत्रका रूपमा प्रयोग गर्दै आएको छु । मैले यस राहदानीलाई प्रयोग गरि अन्य सेवा सुविधामा पनि 'महिला' उल्लेख गरि प्राप्त गर्ने गरेको छु । मेरो ई-सेवा, खल्ती जस्ता डिजिटल भुक्तानी माध्यम र सिम कार्डहरू प्राप्त गर्न यही राहदानी पेश गरि 'महिला' उल्लेख गर्दै आएको छु । मैले सकेसम्म नागरिकता देखाउन नपर्ने र राहदानी पेश गर्दा हुने ठाउँहरूमा यही राहदानीको प्रयोगले 'महिला' उल्लेख गर्दै आएको छु ।यस राहदानीले मलाई निर्धक्क मेरो पहिचान सहित कामकारवाही गर्न मद्दत पुर्याएको छ ।तर राहदानीको प्रयोग गरेर सेवा सुविधा प्राप्त गर्न सक्ने स्थानहरू कम छन् । शिक्षिक क्षेत्रमा शैक्षिक प्रमाणपत्र र अरु प्रायः ठाउँहरूमा नागरिकता प्रमाणपत्र नै प्रयोग गर्नुपर्ने भएकाले जता पनि समस्या भोग्नुपर्छ ।

५.१८ यस प्रकरणमा उपरोक्त लिखित मानव अधिकार र नागरिक अधिकार उल्लंघनहरूको अनुसन्धान गरि सम्बन्धित निकायमा सिफारिस गरि मेरो शिक्षा प्राप्त गर्ने हक, लैङ्गिक पहिचानको हक लगायतका मौलिक हक एवं मानव अधिकारको संरक्षण गरि पाउँ भनि राष्ट्रिय मानव अधिकार आयोगको बागमती प्रदेश कार्यालयमा दर्ता नं १४३ रहेको नेपाल संवत् ११४० गुंला २३ (मिति २०७७ साउन २९) मा उजुरी दर्ता गराएँ । तर उक्त

अरुणी

उजुरी उपर कुनै कारवाही गरि अधिकार उल्लंघनकर्ता उल्लेखित निकाय एवं अधिकारीहरूलाई जवाफदेही बनाउन सकेको छैन ।

५.१९ मैले सोही व्यहोराहरू खुलाई आफ्नो अख्तियारीको मतहात अन्तरगत कामकारवाही गरि मेरो न्यायको लागि नेपाल संवत् ११४० यंला २९ (मिति २०७७ भाद्र ३१) मा बागमती प्रदेशको मुख्यमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय, प्रतिनिधि सभाको शिक्षा तथा स्वास्थ्य समिति, प्रतिनिधि सभाको महिला तथा सामाजिक समिति, प्रतिनिधि सभाको राज्य व्यवस्था तथा सुशासन समिति, राष्ट्रिय सभाको राष्ट्रिय सरोकार तथा समन्वय समिति, र राष्ट्रिय सभाको राज्यका निर्देशक सिद्धान्त, नीति र दायित्वको कार्यान्वयन अनुगमन तथा मूल्याङ्कन समिति साथै नेपाल संवत् ११४० गुंला ३० (मिति २०७७ भाद्र ३) मा प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय, नेपाल संवत् ११४० गुंला २३ (मिति २०७७ साउन २९) मा राष्ट्रिय महिला आयोगलाई ईमेल मार्फत् पत्राचार गरें । तर यी मध्ये प्रतिनिधि सभाको महिला तथा सामाजिक समिति बाहेक कुनै पनि कार्यालयले मेरो निवेदन प्राप्त भएको व्यहोरा समेत मलाई जानकारी गराएनन् । प्रतिनिधि सभाको महिला तथा सामाजिक समितिले फोन मार्फत् मेरो निवेदन प्राप्त भएको र अध्ययन गरि आवश्यक कामकारवाही अघि बढाउने मौखिक आश्वासन दिए । त्यस बाहेक अरु कुनै कामकारवाही भएन । अरु कार्यालयहरूमा मैले पटक-पटक ईमेल मार्फत् फलो-अपको कार्य गरि मेरो निवेदन दर्ता गरिएको वा नगरिएको, गरिएको भए दर्ता मिति र नं प्रदान गर्न अनुरोध गरें । तर कुनै कतैबाट जवाफ आएन ।

६. उपरोक्त उल्लेखित समस्याका बाहेक मैले निम्न प्रकारका दुर्व्यवहार, हिंसा तथा मानव अधिकार एवं संविधान प्रदत्त मौलिक हकहरूको उल्लंघनजन्य कार्यको सामना गर्नु परेको छ ।

६.१ **पहिचान विपरीतको परिचयपत्र तथा प्रमाणपत्र बोक्न बाध्य** : नेपालको संविधानले स्वास्थ्य सम्वन्धी हक सुनिश्चित गरेको छ । मनोभावनात्मक स्वास्थता (Psycho-emotional wellbeing) र सामाजिक स्वास्थता (Social wellbeing) पनि स्वास्थ्यको अभिन्न अङ्गहरू हुन । आफ्नो पहिचान विपरीतको परिचयपत्रबाट चिनिनुपर्दा मलाई प्रत्येक दिन त्रासपूर्ण जीवन बाँच्न बाध्य बनाएको छ । नेपालको संविधान धारा १६ ले प्रत्येक व्यक्तिलाई सम्मानपूर्वक बाँच्न पाउने हक सुनिश्चित गरेको छ । मानव अधिकारको विश्वव्यापी



घोषणापत्र Article १ मा पनि यही कुरा अनुमोदित छ । यसै सर्वोच्च अदालतको निर्णय नं ९८७५ नेकाप २०७४, अङ्क ९ को फैसलामा, "आफ्नो वास्तविक पहिचानभन्दा फरक परिचय पत्रका साथ रहन पर्दा आत्मसम्मानमा चोट पुग्नुका साथै सामुदायिक अपनत्वलाई समेत कमजोर तुल्याउने हुन्छ" भन्ने मान्यतालाई प्रतिपादन गरेको छ । र मैले मेरो लैङ्गिक पहिचान विपरीतको परिचयपत्रबाट चिनिन बाध्य हुँदा सम्मानपूर्वक जीवन बाँच्नबाट वञ्चित भएको छु ।

६.२ **चिकित्सकीय सिफारिस माग्ने :** विपक्षी कतिपय कार्यालयहरूले मलाई मौखिक रूपमा चिकित्सकीय सिफारिस माग्ने गरेको छ । प्रकरण ४.९ मा उल्लेख भएको मेरो जन्म दर्ता संसोधन गर्ने क्रममा वडा कार्यालयले आफ्नो पत्राचारमा "मैले आफू पारलैङ्गिक महिला भएको कुनै प्रमाण पेश नगरेको" भनि समेत उल्लेख गरेका छन् । प्रचलित कुनै पनि कानूनमा नागरिकता पाउन वा सोमा रहेका नाम तथा लैङ्गिक विवरण संसोधन गर्न चिकित्सकिय प्रमाण पेश गर्नुपर्ने व्यवस्था छैन । यस सम्बन्धमा सम्मानित सर्वोच्च अदालतबाट समेत आनिक राना‌को मुद्दा (परमादेश, नेकाप २०७४, अङ्क ९, नि.नं. ९८७५) मा निम्नानुसार कानूनी सिद्धान्त प्रतिपादन भएको अवस्था छ : “कुनै पनि व्यक्तिले आफ्नो स्वःअनुभूति अनुसारको लैङ्गिक पहिचान हासिल गर्नु निजको नितान्त वैयक्तिक आत्मनिर्णयको अधिकारअन्तर्गतको विषय हो। यसमा अरू व्यक्ति समाज राज्य वा कानूनले जैविक लिङ्ग के हो भनी निर्धारण गर्नु सान्दर्भिक हुँदैन। मानिसको स्वतन्त्रता प्रतिष्ठा र आत्मसम्मानमा चोट पुर्याउने खालका कुनै पनि व्यवस्थाहरू मानव अधिकारको दृष्टिकोणबाट समेत मान्य हुन नसक्ने।” त्यसैगरि ३० जुन २०१६ मा पारित संयुक्त राष्ट्र संघको घोषणा (Protection against violence and discrimination based on sexual orientation and gender identity–A/HRC/RES/32/2) मा लैङ्गिक पहिचानलाई व्यक्तिको स्व आत्मनिर्णयद्वारा दाबी गर्ने विषय भएको उल्लेख छ । संयुक्त राष्ट्र संघका ७ वटा संस्थानहरूले जारी गरेको Eliminating forced, coercive, and otherwise involuntary sterilization - An interagency statement मा यस प्रकारको चिकित्सकिय जाँचलाई जबरजस्ती एवं अनिच्छापूर्वक गरिएको चिकित्सा हस्तक्षेप (Coercive involuntary medical interventions) भएको ठहर गर्दै मानव अधिकार हननजन्य कार्यको रुपमा परिभाषित गरेका छन् । त्यसैगरि विश्व स्वास्थ्य संगठनद्वारा प्रकाशित थुप्रै दस्तावेजहरूमा “लैङ्गिक पहिचान” को विषय चिकित्सा प्रणाली वा शारिरीक जाँचद्वारा निर्धारण र प्रमाणित गर्न सकिने विषय नभएको उल्लेख छ । मेरो शरीरमा मेरो अधिकार छ । मैले कुनै प्रकारको शारीरिक परिवर्तन विधि तथा शल्यक्रिया गर्ने वा नगर्ने मेरो निर्णयको विषय हो, र गरेको



त्रुटिपूर्ण २

वा नगरेको विषय मेरो स्वास्थ्य सेवा सम्बन्धी गोपनीयतको हक हो । मैले आफ्नो लैङ्गिक पहिचान अनुसार परिचयपत्रहरू पाउन वा कायम गर्नकै लागि मैले अनिवार्य रूपमा चिकित्सकीय शल्यक्रिया गरेकै हुनुपर्छ भनि बाध्य पार्नु मेरो संविधान प्रदत्त स्वतन्त्रताको हक (आफ्नो शरीरमा आफूले निर्णय गर्न पाउने) र स्वास्थ्य सम्बन्धी हक (अनिच्छापूर्ण शल्यक्रिया गर्न बाध्य पार्नु) को उल्लंघन हो । नेपालको संविधान धारा १७ ले कानून बमोजिम बाहेक कुनै पनि व्यक्तिलाई वैयक्तिक स्वतन्त्रताबाट बञ्चित नगर्ने उल्लेख गरेको छ । सुमन पन्त समेतको फैसला नेकाप २०७४, अङ्क १२, नि.नं. ९९२१ को निर्णयमा यसै सर्वोच्च अदालतले "आफ्नो व्यक्तिगत जीवन कसरी सञ्चालन गर्ने, आफ्नो लैङ्गिक पहिचान के हुने र आत्माको कुन पुकारलाई सुन्ने भन्ने कुरा आत्मनिर्णयको अधिकार हुने" भनि व्याख्या गरेका छन् ।

कुतिपय पारलैङ्गिक व्यक्तिहरूले आफ्नो शरीर परिवर्तन गर्नका लागि विभिन्न चिकित्सकीय विधिहरू अपनाउन सक्छन् । यस्ता विभिन्न विधिहरूलाई Gender affirming health services पनि भनिन्छ । तर यी चिकित्सकीय विधि एकपटक गरेर सकिने विषय होइन । यसमा दर्जनौं भन्दा बढी प्रक्रिया र विधिहरू हुन्छन् जसमा हर्मोनको प्रयोग लगायत थुप्रै प्रकारका शल्यक्रियाहरू पर्छन् । यस्ता कतिपय विधिहरू व्यक्तिको जीवनभर पनि अन्त्य नहुन सक्छ । कतिपय शल्यक्रियाहरू असफल भएर पुनः गर्नुपर्ने पनि हुन सक्छ । कतिपय शल्यक्रियाहरू व्यक्तिको स्वास्थ्यमा जोखिक पुर्याउने समेत हुन सक्छ । सबै व्यक्तिको शरीर एकैनाशको हुँदैन । शारीरिक रूपमा कमजोर व्यक्तिहरू, कुनै गम्भीर रोग लागेका व्यक्तिहरू, , दीर्घ रोगी लगायत थुप्रै स्वास्थ्यका कारणले यस्ता शल्यक्रिया लगायतका विधिहरू गर्न नमिल्ने व्यक्तिहरू पनि छन् । यस्ता कतिपय शल्यक्रियाहरू नेपालमा उपलब्ध नै छैनन् । आर्थिक हिसाबले पनि यस्ता विधिहरू निकै खर्चिलो छन् । एउटा शल्यक्रियालाई नै लाखौं रूपियाँ समेत लाग्न सक्छ । नेपाल जस्तो आर्थिक आय आर्जन कम भएको र अधिकांश जनता बेरोजगारीको शिकार हुनुपरेको देशमा अझै पारलैङ्गिक व्यक्तिहरू शिक्षा र रोजगारीबाट समेत बञ्चित हुनुपरेका अवस्थामा यस्तो शल्यक्रिया सबैले afford गर्न सक्दैन । पारलैङ्गिक व्यक्तिहरूले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचानमा चिनिनकै लागि यस किसिमका चिकित्सकीय प्रक्रियाहरू पुरा गर्नैपर्छ भन्ने बाध्यकारी अवस्था सृजना गर्नु वा यस्तो प्रक्रियाहरू गर्नै पाउँदैन भन्ने निषेधात्मक अवस्थाको सृजना गर्नु दुबै पारलैङ्गिक व्यक्तिहरूको शारीर माथिको अधिकार, स्वायत्तता (Bodily integrity & autonomy) र मानव अधिकारको उल्लंघनजन्य कार्य हो ।

त्रुटिपूर्ण २



६.३ **गोपनीयताको हनन** : नेपालको संविधान धारा २८ ले कुनै पनि व्यक्तिको जीउ, आवास, सम्पत्ति, लिखित, तथ्यांक, पत्राचार, र चरित्र सम्बन्धी विषयको गोपनीयताको हक सुनिश्चित गरेको छ । वैयक्तिक गोपनीयता सम्बन्धी ऐन, २०७५ दफा ३ ले व्यक्तिको शारीरिक तथा निजी जीवनको गोपनीयता र दफा ११ ले लिखतको गोपनीयता सुनिश्चित गरेको छ । मैले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसारको परिचय स्थापना गरिसकेपछि वा गर्ने प्रयास सुरु गरिसकेपछि मलाई जन्मँदा इङ्गित गरिदिएको नाम तथा लैङ्गिक विवरणको मृत्यु भएको मानिन्छ । यी नाम तथा लैङ्गिकतालाई हामी मृतनाम र मृतलैङ्गिकता भन्छौं । कुनै पनि व्यक्तिलाई उसको मृतनाम र मृतलैङ्गिकताले सम्बोधन गर्नु उसको अस्तित्वलाई नै नकार्नु र उसले आफूलाई स्थापित गर्न चाहेको परिचय एवं पहिचानबाट निषेध गर्नु हो । मैले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसारको परिचय स्थापना गर्न मेरो मृतनाम र मृतलैङ्गिकता सम्बन्धी गोपनीयता कायम हुनु वाञ्छनीय हुन्छ । मेरो सबै व्यक्तिगत परिचयपत्र तथा प्रमाणपत्रहरूमा मेरो लैङ्गिक पहिचान अनुसारको परिचय कायम हुन नसक्दा मेरो वैयक्तिक लैङ्गिक इतिहास (personal gender history) प्रति गोपनीयता कायम हुन सकेको छैन ।

६.३.१ **विस्मृतिको हक *(Right to be forgotten)*** : गोपनीयताको हक (Right to privacy) अन्तर्गत पर्ने विस्मृतिको हक (Right to be forgotten) वा मेटिन पाउने हक (Right to erasure) पनि म र म जस्ता पारलैङ्गिक व्यक्तिहरूले आफ्नो पहिचान अनुसारको परिचय स्थापित गर्नका लागि वाञ्छनीय छ । यसार्थ कुनै व्यक्तिको आफ्नो पहिचान अनुसारको परिचय स्थापित भइसकेपछि उसको पहिचान विपरीतको मृतनाम र मृतलैङ्गिकता सान्दर्भिक हुँदैन । त्यस्ता विवरणहरू अभिलेखमा रहिरहँदा मरणोप्रान्त निज व्यक्तिको गोपनीयता भङ्ग हुने जोखिम रहिरहन्छ । अहिलेको डिजिटल युगमा यस्ता गोपनीयताको हनन अझै संवेदनशील हुन जान्छ ।

Court of Justice of the European Union ले विस्मृतिको अधिकार सम्बन्धीको एक मुद्दा Case C-131/12, Google Spain SL, Google Inc. v Agencia Española de Protección de Datos, Mario Costeja González मा देहायको फैसला गरेका छन्:

"*The Court observes in this regard that even initially lawful processing of accurate data may, in the course of time, become incompatible with the directive where, having regard to all the circumstances of the case, the data appear to be inadequate, irrelevant or no longer relevant, or excessive in relation to the purposes for which they were processed and in the light of the time that has elapsed. The Court adds that, when appraising such a request made by the data subject in order to oppose the processing carried out by the operator of a search engine, it should in particular be examined whether the data subject has a right that the information in question relating to him*




उत्कृष्ट

*personally should, at this point in time, no longer be linked to his name by a list of results that is displayed following a search made on the basis of his name. If that is the case, the links to web pages containing that information must be removed from that list of results, unless there are particular reasons, such as the role played by the data subject in public life, justifying a preponderant interest of the public in having access to the information when such a search is made."*

European Union को General Data Protection Regulation (GDPR) Art. 17 Right to erasure ('right to be forgotten') ले पनि विस्मृतिको अधिकार सुनिश्चित गरेको छ । यस कानून बमोजिम डाटा संकलन गरिएको उद्देश्य अनुसार ती डाटा अब उपरान्त आवश्यक नरहेमा, डाटाको विषय (subject) रहेका व्यक्तिले मञ्जुरी फिर्ता लिएमा, डाटा संकलन भएपछि त्यसको प्रयोग र प्रशोधनमा डाटाको विषय (subject) रहेका व्यक्तिले आपत्ती जनाएमा, गैर-कानूनी ढङ्गले डाटाको प्रशोधन भएमा, व्यक्तिगत डाटा सार्वजनिक भएमा, लगायत आधारहरूमा ती डाटा मेटाउन पाउने अधिकारको सुनिश्चित गरिएको छ ।

६.४ **लैङ्गिक दुस्बोधन** ***(Misgendering) :*** कुनै पनि व्यक्ति, विशेष गरि पारलैङ्गिक व्यक्ति लगायतका विविध लैङ्गिक पहिचान भएका व्यक्तिहरूलाई, उनीहरूको लैङ्गिक पहिचान वा उनीहरूले आफूलाई सम्वोधन गर्दा प्रयोग गर्न अनुरोध गरेका लैङ्गिकताबोधक शब्द-शब्दावली प्रतिकूल सम्बोधन गर्ने कार्यलाई लैङ्गिक दुस्बोधन (Misgendering) भनिन्छ । यो एक दुर्व्यवहारपूर्ण कार्य हो। नेपालको संविधानले यस्तो कार्यलाई निषेधित गरेको भए तापनि समाजमा म र म जस्ता पारलैङ्गिक व्यक्तिहरूले लैङ्गिक दुस्बोधनको सामना गर्नु परिरहेको छ । मेरो नागरिकतामा "अन्य लिङ्ग" उल्लेख गरिएकै कारणले विभिन्न सरकारी तथा गैर-सरकारी निकायहरूमा "Sir वा Mam भनेर सम्बोधन गर्न नमिल्ने", "तपाईँलाई त अब के भनेर बोलाउने, दुवै भन्न नमिल्ने पर्नुभयो" जस्ता टिप्पणीहरू पाउने गर्नुपरेको छ । मैले आफूलाई महिला भनेर चिनाउने र सोही अनुसार सम्बोधन गर्न आग्रह गर्दा पनि त्यसको सम्मान गरिँदैन ।

यस समस्यालाई भाषा आयोगले समेत वार्षिक प्रतिवेदन (तेस्रो) २०७५ को परिच्छेद ७ को खण्ड ७.६ मा लैङ्गिक तथा यौनिक अल्पसंख्यक व्यक्तिको सम्मान प्रतिकूल प्रभाव पर्ने गरि भाषाको प्रयोग भइरहेको साथै घर-परिवार, समाज र राष्ट्रिय परिवेशमा उनीहरूको मर्यादा कायम रहने गरि बोलीचाली, उच्चारण, लेखाइ वा सांकेतिक स्वरूपमा शब्द, शब्दावली र वाक्यको प्रयोग सम्बन्धमा कानूनी संरक्षण सुनिश्चित भएको अवस्था नभएको उल्लेख गर्दै निम्नानुसार सिफारीस गरेको छः "नेपालको संविधान भाग ३ अन्तर्गतको मौलिक हक र कर्तव्यसँग सम्बन्धित धारा १६ मा प्रत्येक व्यक्तिलाई सम्मानपूर्वक बाँच्न

उत्कृष्ट



यथार्थ

पाउने हक हुनेछ भनी नैसर्गिक अधिकारको प्रत्याभूतिं गरिएको सन्दर्भमा सङ्घ, प्रदेश र स्थानीय तहमा लैङ्गिक तथा यौनिक अल्पसंख्यक व्यक्तिको सम्मान सुनिश्चित हुनेगरि भाषाको प्रयोग गर्न एवं सामाजिक आधार निर्माण गरि सचेतना कार्यमा समेत पहल हुनु अत्यन्त जरुरी छ।"

यस सम्बन्धमा *New York City Commission on Human Rights Legal Enforcement Guidance on Discrimination on the Basis of Gender Identity or Expression: Local Law No: 3 (2002); N.Y.C. Admin. Code § 8-102(23)* मा निम्नानुसार उल्लेख छ ।

*1. Failing To Use the Name or Pronouns with Which a Person Self-Identifies*

*The NYCHRL requires employers and covered entities to use the name, pronouns, and title (e.g., Ms./Mrs./Mx.)15 with which a person self-identifies, regardless of the person's sex assigned at birth, anatomy, gender, medical history, appearance, or the sex indicated on the person's identification.*

*Most people and many transgender people use female or male pronouns and titles. Some transgender, non-binary, and gender non-conforming people use pronouns other than he/him/his or she/her/hers, such as they/them/theirs or ze/hir.16 They/them/theirs can be used to identify or refer to a single person (e.g., "Joan is going to the store and they want to know when to leave"). Many transgender, non-binary, and gender non-conforming people use a different name than the one they were assigned at birth.*

*All people, including employees, tenants, customers, and participants in programs, have the right to use and have others use their name and pronouns regardless of whether they have identification in that name or have obtained a court-ordered name change, except in very limited circumstances where certain federal, state, or local laws require otherwise (e.g., for purposes of employment eligibility verification with the federal government). Asking someone in good-faith for their name and gender pronouns is not a violation of the NYCHRL.*

*Covered entities may avoid violations of the NYCHRL by creating a policy of asking everyone what their gender pronouns are so that no person is singled out for such questions and by updating their systems, intake forms, or other questionaires to allow all people to self-identify their name and gender. Covered entities should not limit the options for identification to male and female only.*

६.५ **मेरो पहिचानको अपव्याख्या :** मैले आफ्नो वास्तविक लैङ्गिक पहिचानमा आफूलाई चिनाउन थाल्नु मैले "लिङ्ग परिवर्तन गरेको" बा "पुरुषबाट महिला भएको" होइन । म कहिल्यै पनि पुरुष थिइनँ । मैले सँधै आफूलाई केटी / महिला भनि नै चिनेको छु । फरक यति हो कि पहिले सामाजिक रीति अनुसार यौनाङ्गको आधारमा जुन लैङ्गिकता इङ्गित गरि हुर्काइयो, त्यसै अनुरूप जीवन यापन गर्ने बाध्यता थियो भने अहिले मैले ती सामाजिक बन्धनहरूबाट आफूलाई मुक्त गरि आफ्नो स्वःअनुभूतीकै लैङ्गिक पहिचानमा जीवन यापन

यथार्थ



गर्दैछु । मैले आफ्नो वास्तविक पहिचानमा जीवन यापन गर्न सुरु गर्नु मेरो वास्तविक लैङ्गिक पहिचान तर्फको परिवर्तन हो । त्यो भनेको म कुनै एउटा थिएँ र अर्कोमा परिवर्तन भएँ भन्ने अर्थ लगाउन मिल्दैन । म आफू जे हुँ त्यही पहिचानमा खुलेको हुँ र समाज संसारलाई अब देखि मलाई मेरो वास्तविक पहिचानमै चिन्न आव्हान गरेको हुँ । मैले आफूलाई कहिल्यै पुरुष भएको अनुभूती नै गरिनँ । त्यति मात्र नभएर म सानै उमेरमा आफ्नो पहिचान अनुसार जीवनयापन गरेको हुँ र तसर्थ म त्यस उमेरमा 'केटी' र अहिले वयस्क हुँदा 'महिला' भनेर चिनिएँ । म 'केटीबाट नै महिला' भएको हुँ । यसरी "लिङ्ग परिवर्तन गरेको" वा "पुरुषबाट महिला भएको" जस्ता व्याख्याहरू अपमानजक एवं विभेदकारी पनि छ । यस्तो व्याख्या त्याचलैङ्गिक (Cisgender) व्यक्तिहरूको अनुभव, अनुभूती र वास्तविकतालाई मात्र केन्द्रमा राखि वा मध्यनजर गरि हामी पारलैङ्गिक व्यक्तिहरूको अनुभव, अनुभूती र वास्तविकतालाई अन्यकरण र अपवादिकरण गर्नुको उपज पनि हो । मैले आफ्नो लैङ्गिकतालाई कसरी अनुभव गरेको छु, यसको व्याख्या गर्ने अधिकार ममा मात्र निहित छ ।

६.६ **दुर्व्यवहार तथा असंवेदनशील व्यहार** : कुनै पनि सरकारी निकायमा, विशेष गरि आफ्नो पहिचान विपरीतको परिचयपत्र तथा प्रमाणपत्र पेश गर्नुपर्ने परिस्थितिमा र यस रिटको प्रकरण ४ मा विवेचित परिस्थितिहरूमा मैले विभिन्न स्वरूपका दुर्व्यवहार तथा असंवेदनशील व्यहार भोग्नुपरेको छ । मैले प्रकरण ४ मा विवेचना गरेको घटनाक्रमहरूको त कागजी प्रमाण छ, तर हामीले भोग्दै आएको व्यवहारिक, मनोभावनात्मक र आचरणात्मक दुर्व्यवहार तथा असंवेदनशील व्यवहारको कुनै प्रमाण हुन सक्दैन । प्रकरण ४ मा विवेचित थुप्रै घटनाक्रमहरूको दौरान मैले भोग्नुपरेका केही दुर्व्यवहार तथा असंवेदनशील व्यवहारको चर्चा गर्न चाहन्छु । कतिपय दुर्व्यवहारहरू सुक्ष्म (subtle) हुन्छ, जस्तै अनुहारको हाउभाउ, इशारा वा संकेत । कतिपय सरकारी कार्यालयहरूमा झ्यालबाट सुविधा लिनुपर्ने हुन्छ । त्यसरी झ्याल बाहिरबाट आफ्नो मुद्दा व्याख्या गरिरहँदा लाइनमा लागेका वा वरीपरीका अरु व्यक्तिहरूले पनि सुनिरहेका हुन्छन् । मैले यस्तो नितान्त वैयक्तिक विषय त्यसरी सम्बन्धित अधिकारी बाहेक अरु व्यक्तिहरूलाई समेत सुनाउनुपर्ने बाध्यता रहेको र उनीहरूको प्रतिक्रियाले गर्दा अझै असुरक्षित महसुस हुनुपर्ने अवस्था छ । कतिपय कार्यालयहरूमा सम्बन्धित अधिकारीसँग मात्र कुरा राख्नपाउँ, मेरो अलिकति संवेदनशील र गोप्य विषय हो भनि भन्दा समेत त्यस्तो वातावरण मिलाएर सहजिकरण नगरेको र गोपनीयता प्रति असंवेदनशील भएको समेत अनुभव गर्नुपरेको छ । प्रायः जसो यस विषयमा आफ्नो कुरा राख्दै गर्दा सम्बन्धित



कार्यालयका व्यक्तिहरू र सेवाग्रहीहरू समेत यसो तलदेखि माथि सम्म हेर्ने, मुर्ने, मुख बिगार्ने, वरीपरी आएर झुम्मिन आउने जस्ता humiliating अनुभव पनि गर्नुपरेको छ । विशेष गरी मेरो मृतनाम समेत उल्लेख भएको कागजप्रमाण पनि देखाउनुपर्ने अवस्थामा "ए, तपाईँको नाम यस्तो पो थियो" भनेर ठूलो ठूलो स्वरले वा वरीपरीका अरु सबैले सुन्ने गरी पुकारिदिने । मैले मेरो नाम रुक्शना हो त्यसरी नै सम्बोधन गर्नु, त्यो कागजमा उल्लेखित नाम म हटाउन / सच्याउन आएको हुँ, त्यसबाट सम्बोधन नगर्नुहोला भनि बताउँदा बताउँदै समेत मेरो आग्रहको अपमान गरी मृतनामले सम्बोधन गर्ने, आसपासका अरुले सुन्ने गरि बताइदिने वा आफ्नो कार्यालयका अरु कर्मचारीहरूलाई समेत "यहाँ पहिले यस्तो अहिले यस्तो" भनेर सुनाइदिने, जस्ता थुप्रै असंवेदनशील व्यवहारको शिकार हुनपरेको छु । यस रीट निवेदनको प्रकरण प्रकरणमा व्याख्या गरिएको मैले ४ वर्ष देखि विभिन्न सरकारी लगायतका कार्यालयहरूमा आफ्नो लैङ्गिक पहिचान अनुसारको परिचयपत्र तथा प्रमाणपत्र कायम गर्न आवतजावत गर्दा भोग्नु परेको उपरोक्त उल्लिखित विभिन्न दुर्व्यवहारका कारण मलाई हुलाक सेवाको प्रयोगले सरल बनाएको छ । आफू नै उक्त कार्यालयमा जाँदा जेजति भोग्नुपर्ने हुन्छ, हुलाकबाट पत्राचार गर्दा ती अनुभवहरूबाट जोगिने हुनाले मैले हुलाकबाट नै मुख्यतः पत्राचार गर्दै आएको छु । राज्यको निकायहरूमा यसरी असुरक्षित महसुस गर्नुपर्ने बाध्यता छ । कुनै सरकारी निकायमा जानपर्नु भनेको मेरो लागि एउटा मनोभावनात्मक त्रास र बेइज्जतीपूर्ण अनुभव हो । विगत ४ वर्षको यी थुप्रै अनुभवहरू पछि म सरकारी निकायहरूलाई सुरक्षित स्थान ठान्दिनँ । मेरो लागि यी अनुभवहरू मनोभावनात्मक पीडाको पनि कारण बनेको छ र यसले मेरो मनोस्वास्थ्यमा नै प्रतिकूल असर पुर्याएको छ ।

६.७ **मृतनामको प्रयोग *(Deadnaming)*** : कुनै पनि व्यक्तिको आफ्ना लैङ्गिक पहिचान स्थापित भैसकेपछि वा स्थापित गराउन चाहेपछि उसको जन्मँदा इङ्गित गरिएको लैङ्गिकता र नामको मृत्यु भएको मानिन्छ । कसैलाई उसको मृतनामले सम्बोधन (Deadnaming) गर्नु उसको लैङ्गिक पहिचान सहितको अस्तित्वलाई नै नकार्नु हो । विपक्षीहरूद्वारा गरिएको कतिपय पत्राचार र लिखितहरूमा मलाई यसरी deadnaming समेत गरेको छ ।

७. यही सम्मानित सर्वोच्च अदालतले लैङ्गिक पहिचान सम्बन्धिका केही रिट निवेदनहरूको फैसलाहरूमा लैङ्गिक पहिचान सम्बन्धि नजिर सिद्धान्तहरू प्रतिपादन भएको अवस्था छ ।



७.१ नील हिरा समाज समेत भएको मुद्दा (नेकाप २०६५, अङ्क ४, नि.नं. ७९५८) मा

- "बच्चा जन्मदा एउटा लिङ्गीमा जन्मेको भएपनि जैविक (Biological) र प्राकृतिक (Natural) प्रकृया अनुसार जन्मदाको भन्दा अर्को लिङ्गीमा विकास भई जन्मदाको भन्दा फरक लिङ्गीमा लैङ्गिक स्वरुप परिवर्तन हुन सक्छन्। यस्तो परिवर्तन हुँदैमा तिनीहरू मानव जाति वा नागरिक नै होइनन् भन्न नमिल्ने।"
- "मानिसको स्वतन्त्रता, प्रतिष्ठा र आत्मसम्मानमा चोट पुर्‍याउने खालका कुनै पनि व्यवस्थाहरू मानव अधिकारको दृष्टिकोणबाट मान्य हुन सक्दैनन्। धर्म, संस्कृति, परम्परा, मूल्य मान्यता जस्ता कुनै पनि आधारमा व्यक्तिको आधारभूत अधिकारलाई संकुचन गर्न नहुने।"
- "नेपाल सन्धि ऐन, २०४७ को दफा ९ बमोजिम ICCPR/ICESCR समेत नेपाल कानून सरह भएको हुँदा **LGBTT** हरूले आफ्नो पहिचानको अधिकार (Right to have one's own identity) को आधारमा विना भेदभाव आफ्नै पहिचान सहित नेपाल कानूनले दिएको हकहरू अरु सरह निर्वाध रुपमा उपभोग गर्न पाउनु पर्ने।"
- "व्यक्तिको अधिकारको प्रयोगका सम्बन्धमा भएका अन्तर्राष्ट्रिय अभ्यासहरू, बदलिंदो विश्व समाज र अल्पसंख्यकको अधिकारको सम्मान गर्ने परिपाटीलाई हामीले पनि क्रमशः आत्मसात गर्दै जानु पर्दछ। समाजमा विकृति फैलिन्छ कि भन्ने धारणाका आधारमा मात्र यस्ता व्यक्तिको अधिकारलाई कानूनी रुपमा नै बेवास्ता गर्दै जाने हो भने हाम्रो मानव अधिकार प्रतिको प्रतिवद्धतामा अन्तर्राष्ट्रियस्तरमा नै प्रश्न उठ्न जान्छ।"
- "यो समस्या कुनै Psychiatric समस्या नभएर प्राकृतिक रुपमा नै आउने स्वभावगत हो भन्ने कुरा चिकित्सा विज्ञानले प्रमाणित गरिसकेको छ। अब चिकित्सा शास्त्र र विज्ञानले देखाएका निचोडहरूलाई अस्वीकार गरि यथास्थितिमा रहन सकिने अवस्था पनि हुँदैन। मानिसको स्वतन्त्रता, प्रतिष्ठा र आत्मसम्मानमा चोट पुर्‍याउने खालका कुनै पनि व्यवस्थाहरू मानव अधिकारको दृष्टिकोणबाट मान्य हुन सक्दैनन्। धर्म, संस्कृति, परम्परा, मूल्य मान्यता जस्ता कुनै पनि आधारमा व्यक्तिको आधारभूत अधिकारलाई संकुचन गरिनु पनि हुँदैन।"

७.२ आनिक राना समेतको मुद्दा (परमादेश, नेकाप २०७४, अङ्क ९, नि.नं. ९८७५) मा —

- "कुनै पनि व्यक्तिले आफ्नो पहिचानसहित आत्मसम्मानपूर्वक बाँच्न पाउनु निजको आधारभूत मानव अधिकारको विषय हो। यस्तो अवस्थामा फरक लैङ्गिक पहिचान र यौन



अभिमुखीकरण भएका व्यक्तिहरूले पनि आफ्नो स्वतन्त्र पहिचानसहित आत्मसम्मानपूर्वक बाँच्न पाउनु निजको मानव अधिकार तथा संवैधानिक हक हुने।"

- "कुनै पनि व्यक्तिले आफ्नो स्वःअनुभूति अनुसारको लैङ्गिक पहिचान हासिल गर्नु निजको नितान्त वैयक्तिक आत्मनिर्णयको अधिकार अन्तर्गतको विषय हो। यसमा अरू व्यक्ति समाज राज्य वा कानूनले जैविक लिङ्ग के हो भनी निर्धारण गर्नु सान्दर्भिक हुँदैन। मानिसको स्वतन्त्रता प्रतिष्ठा र आत्मसम्मानमा चोट पुर्‍याउने खालका कुनै पनि व्यवस्थाहरू मानव अधिकारको दृष्टिकोणबाट समेत मान्य हुन नसक्ने।"
- "लैङ्गिक अल्पसंख्यक समुदायहरू आफ्नो वास्तविक पहिचानभन्दा फरक परिचय पत्रका साथ रहन पर्दा आत्मसम्मानमा चोट पुग्नुका साथै सामुदायिक अपनत्वलाई समेत कमजोर तुल्याउने हुन्छ। आफ्नो अनुभूतिभन्दा फरकरूपमा आफ्नो परिचय लुकाई त्रासपूर्ण तथा अदृश्य जीवन जीउन बाध्य गर्नु यस्ता यौनिक अल्पसख्यकहरूको मानव अधिकारको उल्लङ्घनसमेत हुन जाने।"
- "कतिपय अवस्थामा आफ्नो लैङ्गिक पहिचान ढिलो गरि मात्र थाहा पाउने र व्यक्त गर्नसक्ने हुँदा यस्तो अवस्थामा पहिले शारीरिक जैविक अङ्गको आधारमा पाएको नागरिकता प्रमाण पत्रमा संशोधन गर्न पाउने अधिकार कानूनतः सुरक्षित गर्नुपर्ने।"
- "कुनै पनि व्यक्ति जैविक रुपमा जुनसुकै लिङ्ग लिएर जन्मे पनि निजको वास्तविक पहिचान भनेको निजले व्यक्तिगत रुपमा गर्ने लैङ्गिक अनुभूती सहितको पहिचान नै हो।"
- "लैङ्गिक पहिचान भन्नाले हरेक व्यक्तिको भित्री मनबाट आएको अनुभूति र लिङ्ग सम्बन्धी व्यक्तिगत अनुभव जुन जन्मदाको जैविक लिङ्गभन्दा विपरीत वा सो प्रतिकूल अन्य पहिरन बोली र व्यवहारबाट व्यक्त गरिने फरक लैङ्गिक अनुभूती सम्झनु पर्दछ" .

७.३ ***सुमन पन्त समेत वि. गृह मन्त्रालय, अध्यागमन विभाग, डिल्लीबजार काठमाडौं समेत भएको मुद्दा (नेकाप २०७४, अङ्क १२, नि.नं. ९९२१)*** मा —

- "आफ्नो व्यक्तिगत जीवन कसरी सञ्चालन गर्ने, आफ्नो लैङ्गिक पहिचान के हुने र आत्माको कुन पुकारलाई सुन्ने भन्ने कुरा आत्मनिर्णयको अधिकार हुने।"

यी रिट निवेदनको विषयवस्तु वा रिट निवेदकहरू पारलैङ्गिक व्यक्ति नभएतापनि "लैङ्गिक पहिचान" सम्बन्धि पनि व्याख्या विश्लेषण भएको छ । सारमा ***लैङ्गिक पहिचान विविध स्वरुपका हुन्छन् र स्वःअनुभुतिको आधारमा लैङ्गिक पहिचान पाउनु व्यक्तिको आत्मनिर्णयको अधिकार हो*** भन्ने कुरा उल्लेखित निर्णयहरुले स्थापित गरेको मूल विषय हो। यद्यपि यी निर्णयहरुले समेत नेपालको



संविधानको भावना तथा आधुनिक विश्वले विकाश र अभ्यास गर्दै आएका मुल्यमान्यताहरू अनुरूप लैङ्गिक पहिचानको अधिकारलाई व्यापक ,र समावेशी रुपमा सम्बोधन गर्न नसकेको देखिन्छ।

८. नेपाल पक्ष राष्ट्र रहेका निम्नलिखित अन्तर्राष्ट्रिय कानूहरूले पारलैङ्गिक व्यक्तिहरूको आर्थिक, सामाजिक तथा सांस्कृतिक अधिकारहरूको सम्मान, संरक्षण र प्रवर्द्धन गर्नु राज्यको दायित्व हुने सम्वन्धमा निम्नानुसारको व्यवस्था गरेको छ :

(क) मानव अधिकार उल्लङ्घनको घटनाका पीडितलाई प्रभावकारी उपचार प्रदान गर्नु विपक्षीहरूको संवैधानिक, कानूनी र अन्तर्राष्ट्रिय कानून अन्तरगतको दायित्व हो। पीडितहरूलाई प्रभावकारी उपचारको प्रत्याभुती गर्ने अन्तर्राष्ट्रिय कानूनहरूमा खासगरि मानव अधिकारको विश्वव्यापी घोषणा पत्र, १९४८ को धारा ८, नागरिक तथा राजनीतिक अधिकार सम्बन्धी अनुबन्धको धारा २(३) ले प्रभावकारी उपचारको हक सम्बन्धी व्यवस्था गरेको छ। प्रभावकारी उपचारको हक अन्तरगत न्यायको हक महत्वपूर्ण हक हो। साथै प्रभावकारी उपचारको हकलाई सुनिश्चित गर्न राज्यले अपनाउनु पर्ने विभिन्न उपाय र तरिकाहरूका सम्वन्धमा पनि यस अनुबन्धले सम्बन्धित पक्ष राष्ट्र उपर विभिन्न दायित्वहरू सृजना गरेको छ। यस अन्तरगत मानव अधिकार उल्लङ्घनका अपराधहरूको अनुसन्धान र दोषी उपर अभियोजन गर्ने दायित्व समेत पर्दछ। संयुक्त राष्ट्र संघिय मानव अधिकार समितिलाई अनुवन्धका व्यवस्थाहरूको व्याख्या गर्ने अधिकार छ । जसको व्याख्यात्मक टिप्पणी नं. २ मा ***"…..अधिकारहरूको उल्लङ्घनमा परेका व्यक्तिहरूलाई प्रभावकारी उपचारको अधिकार हुने र त्यस अन्तरगत पीडकलाई न्यायको दायरामा ल्याई दोषी पाइएको खण्डमा त्यस्ता व्यक्तिलाई दण्डित गर्नुपर्ने"*** भन्ने व्याख्या गरेको छ ।

(ख) त्यसैगरि नेपालले मानव अधिकारको विश्वव्यापी घोषणा पत्र (UDHR), नागरिक तथा राजनितीक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय अभिसन्धी (ICCPR), आर्थिक, सामाजिक तथा सांस्कृतीक अधिकार सम्वन्धी अन्तर्राष्ट्रिय अभिसन्धी (ICESCR) र महिला विरुद्धको सबै किसिमको भेदभाव उन्मुलन सम्वन्धी संयुक्त राष्ट्रसंघिय महासन्धी (CEDEW) लगायत दर्जन भन्दा बढी अन्तर्राष्ट्रिय महासन्धीहरूको अनुमोदन सम्मीलन गरेको छ । यि सबै महासन्धीहरूमा सबै किसिमका विभेदको अन्त्य गर्ने र मानव अधिकार संरक्षण र सम्वर्द्धन गर्ने दायित्व राज्यउपर निरोपित गरिएको छ । मानव अधिकारको लागि सर्वमान्य दस्तावेजको रुपमा रहेको UDHR ले मानव अधिकारको पहिचान गरि मानव प्रतिष्ठा, समानता र स्वतन्त्रताको विश्वव्यापी सम्मान र पालना गर्न आव्हान गरेको छ । यसको धारा २, धारा ७ र धारा २३ ले क्रमशः जाती, वर्ण, लिङ्ग समेतका आधारमा भेदभाव नगरिने, कानूनो दृष्टीमा सबै समान हुने र विना भेदभाव कानूनको समान संरक्षणका हकदार हुने समेतका अधिकार हुने घोषणा गरेको छ । ICCPR को धारा २ उपरको आम टिप्पणी नं. ३१ ले अधिकारको प्रचलनका लागि कानूनी तथा अन्य उपायहरूको अवलम्बन गर्ने, मानव अधिकार उल्लंघनका घटनाहरूको अनुसन्धान गर्ने, उल्लंघन विरुद्ध प्रभावकारी



उपचार प्रदान गर्ने, निश्चित उल्लंघनका पीडिकहरूलाई न्यायको दायरामा ल्याउने र पीडितलाई परिपुरण प्रदान गर्ने दायित्व राज्यको हुन्छ भनि ठहर गरेको छ । त्यसैगरि ICESCR को धारा २ परिच्चद २ ले जात, वर्ण, लिङ्ग, भाषा, धर्म, राजनीतिक वा अन्य आस्था, राष्ट्रिय वा समाजिक उत्पती, सम्पती, जन्म वा अन्य हैसियत लगायत कुनै पनि आधारमा भेदभाव गर्न नहुने व्यवस्था गरेको छ । यस धारामा उल्लेखित *"अन्य हैसियत (other status)"* को व्याख्या गर्दै संयुक्त राष्ट्रसंघिय आर्थिक, सामाजिक तथा सास्कृतीक अधिकार सम्बन्धि समितिद्वारा General Comment No. 20 (E/C.12/GC/20, 2 July 2009) मा निम्नानुसार व्याख्या गरेको छ :

*"Other status" as recognized in article 2, paragraph 2, includes sexual orientation. States parties should ensure that a person's sexual orientation is not a barrier to realizing Covenant rights, for example, in accessing survivor's pension rights. In addition gender identity is recognized as among the prohibited grounds of discrimination; for example, persons who are transgender, transsexual or intersex often face serious human rights violations, such as harassment in schools or in the workplace."*

त्यसैगरे उल्लेखित General Comment मा उक्त समितीले उल्लेखित आधारमा हुन भेदभावहरूलाई अन्त्य गर्ने राज्यको दायित्व हुने ठहर गर्दै त्यसकालागि महासन्धीका सदस्य राज्यले चाल्नुपर्ने कदमका बारेमा निम्नानुसार टिप्पणी गरेको छ :

*"States parties must adopt an active approach to eliminating systemic discrimination and segregation in practice. Tackling such discrimination will usually require a comprehensive approach with a range of laws, policies and programmes, including temporary special measures. States parties should consider using incentives to encourage public and private actors to change their attitudes and behaviour in relation to individuals and groups of individuals facing systemic discrimination, or penalize them in case of non-compliance. Public leadership and programmes to raise awareness about systemic discrimination and the adoption of strict measures against incitement to discrimination are often necessary. Eliminating systemic discrimination will frequently require devoting greater resources to traditionally neglected groups. Given the persistent hostility towards some groups, particular attention will need to be given to ensuring that laws and policies are implemented by officials and others in practice."*

(ग) संयुक्त राष्ट्र संघको सचिवालयद्वारा १२ जुलाई २०१८ मा महासभामा प्रस्तुत "यौन अभिमुखीकरण र लैङ्गिक पहिचानमा आधारित हिसा र विभेद विरुद्ध संरक्षण" सम्बन्धी स्वतन्त्र विज्ञको प्रतिवेदन (A/73/152) ले सदस्य राष्ट्रहरूलाई विभिन्न सिफारीसहरू गरेको छ । जसमध्ये महत्वपूर्ण सिफारीसहरू यस प्रकार छन्:

(Page 14) F. Recognition procedures :- In February 2017, on the basis of the legal obligation of non-discrimination, the recommendations by United Nations human rights mechanisms and a survey of international good practices, the United Nations High Commissioner for Human Rights recommended certain features for the process of recognition, with which the mandate holder concurs. Under those parameters, the process of recognition should:

- Be based on self-determination by the applicant
- Be a simple administrative process




- Not require applicants to fulfil abusive requirements, such as medical certification, surgery, treatment, sterilization or divorce
- Acknowledge and recognize non-binary identities, such as gender identities that are neither "man" nor "woman"
- Ensure that minors have access to recognition of their gender identity

(Page 24) V. Recommendations: - 81. Furthermore, the Independent Expert urges States, through all appropriate and relevant means at its disposal, to:

(b) Eliminate abusive requirements as prerequisites for change of name, legal sex or gender, including forced, coerced or otherwise involuntary sterilization; medical procedures related to transition, including surgeries and hormonal therapies; undergoing medical diagnosis, psychological appraisals or other medical or psychosocial procedures or treatment; requirements relating to economic status; health; marital, family or parental status; and any third-party opinion. This should extend to ensuring that a person's criminal record, immigration status or other status is not used to prevent a change of name, legal sex or gender;

(d) Enact gender recognition systems concerning the rights of trans persons to change their name and gender markers on identification documents. The procedure involved should ensure due respect for free and informed choice and bodily autonomy. In particular, taking into account identified best practices, the processes should:

(i) Be based on self-determination by the applicant;

(ii) Be a simple administrative process;

(iii) Be confidential;

(iv) Be based solely on the free and informed consent of the applicant without requirements such as medical and/or psychological or other certifications that could be unreasonable or pathologizing;

(v) Acknowledge and recognize non-binary identities, such as gender identities that are neither "man" nor "woman" and offer a multiplicity of gender marker options;

(vi) Be accessible and, to the extent possible, cost-free;

(e) Examine seemingly neutral requirements that are prerequisites for change of name, legal sex or gender for potential or actual disproportionate effects in the light of the realities of the trans populations in each given context.

(घ) *Yogyakarta Principles +10* ले सिमान्कृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्तिहरूले साना गर्नु परेका समस्या, उनिहरूका अधिकार र राज्यको भुमिका सम्बन्धमा निम्न सिद्धान्तहरूको विकाश गरेको छः

Principle 31 : The Right to Legal Recognition

Everyone has the right to legal recognition without reference to, or requiring assignment or disclosure of, sex, gender, sexual orientation, gender identity, gender expression or sex characteristics. Everyone has the right to obtain identity documents, including birth certificates, regardless of sexual orientation, gender identity, gender expression or sex characteristics. Everyone has the right to change gendered information in such

ञरकौनी




documents while gendered information is included in them.

*STATES SHALL:*

A. Ensure that official identity documents only include personal information that is relevant, reasonable and necessary as required by the law for a legitimate purpose, and thereby end the registration of the sex and gender of the person in identity documents such as birth certificates, identification cards, passports and driver licences, and as part of their legal personality;

B. Ensure access to a quick, transparent and accessible mechanism to change names, including to gender-neutral names, based on the self-determination of the person;

C. While sex or gender continues to be registered:

i. Ensure a quick, transparent, and accessible mechanism that legally recognises and affirms each person's self-defined gender identity;

ii. Make available a multiplicity of gender marker options;

iii. Ensure that no eligibility criteria, such as medical or psychological interventions, a psycho-medical diagnosis, minimum or maximum age, economic status, health, marital or parental status, or any other third party opinion, shall be a prerequisite to change one's name, legal sex or gender;

iv. Ensure that a person's criminal record, immigration status or other status is not used to prevent a change of name, legal sex or gender.

९. प्रस्तुत निवेदनका प्रकरण प्रकरणमा उल्लेखित विषयहरूले मैले पारलैङ्गिक महिला भएकै कारणले भोग्नु परेका नीतिगत एवं संरचनामा रहेका समस्याहरूको चित्रण गर्दछन् । राज्यले यस्ता समस्याहरूलाई सम्बोधन गरि पीडित व्यक्ति तथा जनसमुदायको अधिकारको संरक्षणका लागि उपयुक्त नीतिनियम, कानून तथा संरचनाहरूको प्रबन्ध गरि विना भेदभाव राष्ट्रिय अन्तरार्ष्ट्रिय कानूनले प्रत्याभूत गरेका अधिकारहरू उपभोग गर्न पाउनु म निवेदकको अधिकारको विषय हो । मानव अधिकारको विश्वव्यापी घोषणा पत्रको धारा २ ले विभेद विरुद्धको हक, ऐ. को धारा ७ र नागरिक तथा राजनीतिक अधिकार सम्बन्धी अन्तर्राष्ट्रिय प्रतिज्ञापत्र धारा २(३) ले प्रभावकारी उपचार पाउने हक र धारा २६ ले समानताको हक प्रदान गरेको छ । त्यसैगरि आर्थिक, समाजिक तथा सांस्कृतिक अधिकार सम्बन्धी अन्तरार्ष्ट्रिय प्रतिज्ञापत्रको धारा २ र महिला विरुद्ध हुने सबै प्रकारका विभेद उन्मुलन सम्बन्धी महासन्धीको धारा २(१) ले विभेद विरुद्धको हक र ऐ. को धारा २६ ले समानताको हकको व्यवस्था गरेको छ। यी महासन्धीहरूमा व्यक्तिको मानव अधिकारको संरक्षण र सम्बर्द्धन गर्ने तथा सबै किसिमका विभेदको अन्त्य गर्ने प्रावधानलाई स्वीकार गरिएको छ। नेपाल सन्धि ऐन, २०४७ बमोजिम उल्लेखित अन्तर्राष्ट्रिय कानूनहरूको पालना गर्नुपर्ने विपक्षी नेपाल सरकारको अन्तरार्ष्ट्रिय कानून अन्तर्गतको दायित्व हो । त्यसैगरि नेपालको संविधानको प्रस्तावनाको चौथो परिच्छेदमा "वर्गिय, जातीय, क्षेत्रीय, भाषिक, धार्मिक, लैङ्गिक विभेद र सबै प्रकारका जातीय छुवाछुतको अन्त्य गरि आर्थिक समानता, समृद्धि र सामाजिक न्याय सुनिश्चत गर्न समानुपातिक, समावेशी र सहभागीतामूलक सिद्धान्तका आधारमा समतामुलक समाजको निर्माण गर्ने" भन्ने उल्लेख



ञरकौनी

तस्दिकी 2




गरिएको छ । यसको धारा १ ले संविधानलाई नेपालको मूल कानूनको मान्यता दिँदै संविधानसँग बाझिने कानून बाझिएको हदसम्म अमान्य हुने व्यवस्था गरेको छ। धारा १० मा कुनै पनि नेपाली नागरिकलाई नागरिकता प्राप्त गर्ने हकबाट बन्चित नगरिने र नेपालमा प्रादेशिक पहिचान सहितको एकल संघीय नागरिकताको व्यवस्था गरिने कुरा उल्लेख छ। धारा १२ ले संविधान बमोजिम बंशजको आधारमा नेपालको नागरिकता प्राप्त व्यक्तिले निजको आमा वा बाबुको नामबाट लैङ्गिक पहिचान सहितको नेपालको नागरिकताको प्रमाणपत्र पाउन सक्ने व्यवस्था गरेको छ। त्यसैगरि संविधानको मौलिक हक र कर्तव्य अन्तर्गत धारा १६ ले सम्मानपूर्वक बाँच्न पाउने हक, धारा १७ ले स्वतन्त्रताको हक र धारा १८ ले समानताको हकको सुनिश्चतता गरेको छ। समानताको हक अन्तर्गत सबै नागरिक कानूनको दृष्टिमा समान हुने र कसैलाई पनि कानूनको समान संरक्षणबाट बञ्चित नगरिने कुरा महत्वपूर्ण छ। साथै धारा १८ को उपधारा (२) ले सामान्य कानूनको प्रयोगमा उत्पती, धर्म, वर्ण, जात, जाती, लिङ्ग, शारीरिक अवस्था, अपाङ्गता, स्वास्थ्य स्थिती, बैवाहिक स्थिती, गर्भावस्था, आर्थिक अवस्था, भाषा वा क्षेत्र, वैचारिक आस्था वा यस्तै अन्य कुनै पनि आधारमा भेदभाव गरिने छैन। उपधारा (३) ले राज्यले नागरिकहरूका विच उत्पती, धर्म, वर्ण, जात, जाती, लिङ्ग, आर्थिक अवस्था, भाषा वा क्षेत्र वा वैचारिक वा यस्तै अन्य कुनै आधारमा भेदभाव गर्ने छैन तर पारलैङ्गिक व्यक्तिहरू लगायत सामाजिक वा सांस्कृतिक दृष्टिले पिछडिएका महिला, दलित, आदीवासी, आदीवासी जनजाती, मधेशी, थारु, मुस्लिम, उत्पीडित वर्ग, अल्पसंख्यक, सिमान्तकृत, किसान, श्रमिक, युवा, बालबालिका, जेष्ठ नागरिक, अपाङ्गता भएका व्यक्ति, गर्भावस्थाका व्यक्ति, अशक्त वा असहाय, पिछडिएको क्षेत्र र आर्थिक रुपले विपन्न खस आर्य नागरिकको संरक्षण, सशक्तिकरण वा विकासका लागि कानून बमोजिम विशेष व्यवस्था गर्न रोक लगाएको मानिने छैन भन्ने व्यवस्था गरेको छ। लैङ्गिक तथा यौनिक अल्पसंख्यक लगायत केही खास वर्ग र समुदायको संविधान प्रदत्त यो हक विशिष्टिकृत हक हो र यसको प्रचलनमा विभेद हुनु हुदैन। त्यसैगरि संविधानको धारा २८ ले गोपनीयताको हक, धारा ३१ ले शिक्षा सम्वन्धी हक, ३३ ले रोजगारीको हक, धारा ३५ ले स्वास्थ्य सम्वन्धी हक, धारा ३८ ले महिलाको हक, धारा ३९ ले बालबालिकाको हक र धारा ४२ ले सामाजिक न्यायको हकलाई समेत मौलिक हकको रुपमा सुनिश्चतता प्रदान गरेको छ। यसका अतिरिक्त धारा ५० को उपधारा (१) ले कानूनको शासन, मौलिक हक तथा मानवअधिकारका मुल्य र मान्यता, लैङ्गिक समानता, सहभागिता र सामाजिक न्यायको माध्यमबाट राष्ट्रिय जीवनका सबै क्षेत्रमा न्यायपूर्ण व्यवस्थाका साथै ऐ. को उपधारा २ ले सबै प्रकारका विभेद, शोषण र अन्यायको अन्त्यकालागि राज्य उपर थप दायित्व निरोपित गरेको छ। साथै धारा १२६ ले नेपालको न्याय सम्वन्धि अधिकार संविधान, अन्य कानून र न्यायका मान्य सिद्धान्त अनुसार अदालतबाट प्रयोग गरिने र मुद्दा मामिलाका रोहमा अदालतले दिएको आदेश वा निर्णयको सवैले पालना गर्नुपर्ने व्यवस्था गरेको छ ।

१०. अतः माथि विभिन्न प्रकरण प्रकरणमा लेखिए बमोजिम विपक्षीका कृयाकलापबाट नेपालको संविधानको धारा १६, १८, २८, ३१, ३३, ३५, ३८, ३९ र ४२ द्वारा प्रदत्त अधिकारको

तस्दिकी 2



हनन हुनुका साथै सो कृयाकलाप सम्मानित अदालतबाट प्रतिपादित नजिर सिद्धान्त समेतको बर्खिलाप भएकाले विपक्षीहरूका नाउँमा नेपालको संविधानको धारा १३३ (२) र (३) तथा न्याय प्रशासन ऐन, २०७३ को दफा ८ (१) बमोजिम निम्नानुसार आदेश जारी गरि पाउँ ।

क) प्रस्तुत निवेदनसाथ संलग्न नागरिकता, शैक्षिक प्रमाणपत्रहरू लगायतका कागजपत्र तथा विपक्षी निकायहरुमा गरिएका पत्राचारहरुमा मेरो वास्तविक लैङ्गिक पहिचान विपरीतको नाम तथा लैङ्गिक विवरण उल्लेख छ । यी कागजपत्रहरु सार्वजनिक भएको अवस्थामा मेरो व्यक्तिगत विवरणको गोपनीयता समेत भङ्ग हुन जाने भएकोले उक्त नागरिकता, शैक्षिक प्रमाणपत्रहरू, विपक्षी निकायहरुमा गरिएका पत्राचार लगायतका कागजपत्रहरुलाई गोप्य राख्न, यस मुद्दासँग सम्बन्धित अधिकारी बाहेक अरु कुनै व्यक्ति, संस्था, सञ्चारमाध्यमलाई उपलब्ध नगर्न नगराउन एवं कुनै हिसाबले सार्वजनिक नगर्न नगराउन अन्तरिम आदेश तथा यस मुद्दा किनार लागिसकेपछि ती कागजपत्रहरुलाई अरु कुनै व्यक्ति, संस्था, सञ्चारमाध्यम कसैलाई उपलब्ध नगर्न नगराउन एवं कुनै हिसाबले सार्वजनिक नगर्न नगराउन, पूर्णतः गोप्य राख्न परमादेश लगायत अन्य उपयुक्त आदेश जारी गरिपाउँ ।

ख) विपक्षी कतिपय कार्यालयहरूद्वारा प्रदान गरिएको परिचयपत्र तथा प्रमाणपत्रहरुमा मेरो लैङ्गिक पहिचानको सहि प्रतिनिधित्व नगर्ने नाम तथा लैङ्गिक विवरण उल्लेख छ । म त्यस नाम तथा लैङ्गिक विवरणले चिनिन चाहन्नँ । त्यस्ता नाम तथा लैङ्गिक विवरणले सम्बोधन हुँदा मेरो आत्मसम्मानमा गम्भीर चोट पुग्नुका साथै मलाई मनोभावनात्मक पीडा समेत निम्त्याउँछ । तसर्थ यस रिट निवेदनको कामकारवाही, सुनुवाई, बहस लगायत विपक्षीद्वारा पठाइने लिखित जवाफमा समेत त्यस नाम तथा लैङ्गिक विवरणबाट मलाई सम्बोधन नगर्न नगराउन र निवेदनमा उल्लिखित 'रुक्शना' नामबाट नै सम्बोधन गर्न गराउन एवं मेरो मृतनामको प्रयोग, उल्लेख र सम्बोधन नगर्न नगराउन अन्तरिम आदेश जारि गरिपाउँ । त्यस नाम तथा लैङ्गिक विवरणको बारेमा जिकिर गर्नुपर्दा "निजको मृतनाम" अथवा "निजको शैक्षिक प्रमाणपत्रमा उल्लेख नाम" भनि सम्बोधन वा जिकिर गरिपाउँ ।

ग) मैले पेश गरेको विश्वविद्यालय रजिष्ट्रेशन फारम दर्ता गर्न र दर्ता नम्बर प्रदान गर्न इन्कार गरिएको कार्यले मेरो संविधान प्रदत्त शिक्षा प्राप्त गर्ने लगायतको मौलिक हक उल्लंघन भएको छ । यसै कारणले विगत ३ वर्ष मेरो अध्ययन प्रभावित भएको छ । यस विषयमा तत्काल न्यायिक हस्तक्षेप नहुने हो भने मेरो शैक्षिक भविष्यमा अपुरणीय क्षति पुग्न जाने भएकोले शिक्षा प्राप्त गर्न पाउने मेरो मौलिक हक संरक्षणका लागि तत्काल नाम 'रुक्शना कपाली' र लैङ्गिक विवरण 'महिला' उल्लेख गरि उक्त रजिष्ट्रेशन फारम दर्ता गर्नु र म निवेदकलाई दर्ता नम्बर उपलब्ध गराउनुका साथै पहिले भर्ना भएकै आधारमा स्नातक तहको अध्ययनलाई निरन्तरता दिन पाउने प्रवन्ध गर्नु गराउनु भनि विपक्षी त्रिभुवन विश्वविद्यालय परिक्षा नियन्त्रण कार्यालयको नाउँमा सर्वोच्च अदालत नियमावली, २०७४

को नियम ४९ बमोजिम अन्तरिम आदेश जारी गरिपाउँ । साथै उक्त रजिष्ट्रेशन फाराम दर्ता हुन नसक्दा मेरो उच्च शिक्षा अध्ययन कार्य प्रभावित भएको हुँदा समयसिमाको हकमा आदेश जारी भएको मितिले बढीमा एक महिनाको समयसिमा समेत तोकी पाउँ।

साथै न्यायिक व्याख्याको माध्यमद्वारा यसरी रजिष्ट्रेशन फारम दर्ता गर्दा कुनै आन्तरिक प्रशासनिक तथा कार्यविधिगत नीतिनियम, कानून तथा कार्यविधि भए सो समेतमा तत्कालन पुनरावलोकन एवं संशोधन गर्नु गराउनु भनि विपक्षी प्रधानमन्त्री तथा मन्त्रिपरिषदको कार्यालय, शिक्षा मन्त्रालय, त्रिभुवन विश्वविद्यालय र यसका उपकुलपति, परिक्षा नियन्त्रण कार्यालय समेतका नाउँमा परमादेशको आदेश जारी गरी पाउँ ।

घ) मैले मेरो कक्षा १० को शैक्षिक प्रमाणपत्र बुझाएर सेवा लिनुपर्ने जुनसुकै संस्था वा निकायमा मलाई सोही प्रमाणपत्रको आधारमा सेवाबाट वञ्चित गर्ने वा मेरो उक्त शैक्षिक प्रमाणपत्रमा उल्लिखित नाम र लैङ्गिक विवरण नै प्रयोग गर्नपर्ने बाध्यता सृजना गरि मेरो वास्तविक लैङ्गिक पहिचान अनुसारको परिचय (नाम तथा लैङ्गिक विवरण) अनुसार चिनिनबाट वञ्चित गर्ने गरेको हुनाले सम्बन्धित जो कोहीलाई लागु हुने गरि मेरो कक्षा १० को शैक्षिक प्रमाणपत्र संसोधन नभएसम्म मलाई उक्त प्रमाणपत्र बुझाई सेवा पाउन पर्ने संस्था वा निकायमा सेवा पाउनबाट वञ्चित नगर्न र उक्त प्रमाणपत्रमा उल्लेखित नाम तथा लैङ्गिक विवरण नै प्रयोग गर्न बाध्य नबनाई आफ्नो लैङ्गिक पहिचान अनुसारको नाम तथा लैङ्गिक विवरण अर्थात् नाम 'रुक्शना कपाली' र लैङ्गिक विवरण 'महिला' प्रयोग गर्न पाउन हक सुनिश्चित गरि सर्वोच्च अदालत नियमावली, २०७४ को नियम ४९ बमोजिम अन्तरिम आदेश जारी गरिपाउँ ।

ङ) विपक्षी राष्ट्रिय परिक्षा बोर्डबाट जारी भएको च.नं. ९५४, मिति २०७६/०९/०८ उक्त पत्र एवं पत्रमा उल्लेखित मिति २०७६/०५/१९ मा भएको भनिएको उक्त निर्णय गैर-कानूनी एवं स्वेच्छाचारी हुनुका साथै सम्मानित अदालतबाट प्रतिपादित नजिर सिद्धान्त समेतको विपरित छ । मेरो कक्षा १० को शैक्षिक प्रमाणपत्रहरू संसोधन भएनन् भने मेरो शैक्षिक भविष्यमा अपुरणीय क्षति पुग्न जाने, पहिचान विपरीतको शैक्षिक प्रमाणपत्रहरूबाट बाधा, अड्चन तथा हिंसाको समेत उच्च जोखिममा रहने र पहिचान विपरीतको परिचयबाट चिनिन नचाहँदा नचाहँदै पनि ति विवरणहरू अरुलाई थाहा दिन बाध्य हुने स्थिति समेत छ । साथै यसले मलाई मेरो लैङ्गिक पहिचान अनुसारको परिचय स्थापित गर्नबाट वञ्चित गरेको र मेरो संविधान प्रदत्त मौलिक हकको उपभोगमा समस्या सृजना गरेकोले उक्त निर्णय र पत्र दुबैलाई उत्प्रेषणको आदेशद्वारा बदर गरिपाउँ । साथै मेरो कक्षा १० को शैक्षिक प्रमाणपत्रहरूमा उल्लेखित नाम तथा लैङ्गिक विवरण मेरो वास्तविक लैङ्गिक पहिचान अनुसार लैङ्गिक विवरण "महिला" र नाम "रुक्शना कपाली" उल्लेख गरि संसोधन गर्न गराउन भनि राष्ट्रिय परिक्षा बोर्डका नाउँमा परमादेश लगायत उपयुक्त आदेश जारी गरिपाउँ । साथै वास्तविक लैङ्गिक पहिचानका आधारमा शैक्षिक प्रमाणपत्रमा उल्लेख



संसोधन/परिवर्तन हुन नसक्दा मेरो शैक्षिक भविष्य नै प्रभावित भएको हुँदा समयसिमाको हकमा आदेश जारी भएको मितिले बढीमा एक महिनाको समयसिमा समेत तोकी पाउँ ।

साथै न्यायिक व्याख्याको माध्यामद्वारा उल्लेखित शैक्षिक प्रमाण पत्रमा उल्लेखित व्यहोराको संशोधन कायम गर्न कुनै नीतिनियम, कानून तथा कार्यविधिको व्यवस्था बाधक रहेको भनि विपक्षीहरूबाट लिखित जवाफ प्रस्तुत हुन आए त्यस्तो व्यवस्थालाई अविलम्ब रुपमा संशोधन गरी आवश्यक कानूनी व्यवस्था गर्नु गर्न लगाउनु भनि प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय, राष्ट्रिय परिक्षा बोर्ड र शिक्षा मन्त्रालय लगायतका सम्वन्धित विपक्षीहरूका नाउँमा परमादेशको आदेश जारि गरीपाउँ ।

च) मेरो व्यक्तिगत कागजप्रमाणहरूमा उल्लेखित नाम तथा लैङ्गिक विवरण मेरो वास्तविक लैङ्गिक पहिचान अनुसार लैङ्गिक विवरण "महिला" र नाम "रुक्शना कपाली" उल्लेख गरि संसोधन गर्न गराउन भनि जन्मदर्ताको हकमा राष्ट्रिय परिचयपत्र तथा पञ्जीकरण विभाग, ललितपुर महानगरपालिकाको कार्यालय र ललितपुर महानगरपालिका वडा नं १६ कार्यालयको नाउँमा; कक्षा ८ को शैक्षिक प्रमाणपत्रको हकमा जिल्ला शिक्षा विकास तथा समन्वय इकाइ ललितपुरको नाउँमा; नागरिकता प्रमाणपत्रको हकमा गृह मन्त्रालय र जिल्ला प्रशासन कार्यालय ललितपुरको नाउँमा; राहदानीको हकमा राहदानी विभागको नाउँमा; मतदाता परिचयपत्रको हकमा निर्वाचन आयोगको नाउँमा; कक्षा १० को चारित्रिक प्रमाणपत्रको हकमा इडेन गार्डेन आवासिय विद्यालयको नाउँमा; लगायत सम्पूर्ण विपक्षी कार्यालयहरूद्वारा प्रदान गरिने मेरो व्यक्तिगत व्यक्तिगत कागजप्रमाणमा समेत समयसिमाको हकमा आदेश जारी भएको मितिले बढीमा एक महिनाको समयसिमा समेत तोकी परमादेश लगायत उपयुक्त आदेश जारी गरिपाउँ ।

छ) मैले आफ्नो लैङ्गिक पहिचान अनुसारको परिचय स्थापित गरिसकेपछि मेरो पहिलेको नाम र लैङ्गिक विवरण के थियो भन्ने विषय सान्दर्भिक रहँदैन । त्यस विगतमा मेरो वैयक्तिक गोपनीयताको अधिकार र विस्मृतिको अधिकार (Right to be forgotten) लाई समेत सुनिश्चित गरि सम्पूर्ण विपक्षीहरूलाई त्यस्तो मेरो मृतनाम र मृतलैङ्गिकता उल्लेख भएका कागजप्रमाण, तथा दस्तावेजहरू लगायत मैले आफ्नो लैङ्गिक पहिचान अनुसार संसोधन सम्वन्धी दिएका निवेदन तथा पत्राचारहरू तथा ती कार्यालयहरूको अभिलेखबाट मेरो मृतनाम र मृतलैङ्गिकता मेटाउन भनि समयसिमाको हकमा आदेश जारी भएको मितिले बढीमा एक महिनाको समयसिमा समेत तोकी परमादेश लगायत उपयुक्त आदेश जारी गरिपाउँ ।

ज) मैले आफ्नो लैङ्गिक पहिचान अनुसारको परिचय स्थापित गरिसकेपछि मेरो नाममा एकरूपता कायम हुने र मेरो लैङ्गिक पहिचानको सहि प्रतिनिधित्व गर्ने नाम नै कायम रहने भएपछि वडा कार्यालबाट प्राप्त दुई नाम एकै व्यक्ति रहेको व्यहोराको सिफारिस असान्दर्भिक हुन

जान्छ । तसर्थ मेरो एक मात्र नाम 'रुक्शना कपाली' कायम हुने गरि साविक ललितपुर उप-महानगरपालिका वडा १८ को मिति २०७२/०५/२३ को च.नं. ६३/०७२/०७३ र हाल ललितपुर महानगरपालिका वडा १६ को मिति २०७५/०८/१६ को च.नं. ४५ का पत्रहरू पनि उत्प्रेषणको आदेशद्वारा बदर गरिपाउँ ।

झ) सम्पूर्ण विपक्षीहरूलाई आफ्नो अभिलेखमा मेरो मृतनाम र मृतलैङ्गिकता सम्बन्धिको विवरण कुनै हिसावले सार्वजनिक गर्ने, बाहिर ल्याउने, अन्य व्यक्तिहरूलाई प्रदान गर्ने वा सञ्चारमाध्यमहरूलाई प्रदान नगर्न तथा गोपनीयता कायम गर्न परमादेश लगायत उपयुक्त आदेश जारी गरिपाउँ ।

११. प्रस्तुत निवेदनमा उठाईका विषयवस्तु म निवेदकको शिक्षा लगायतका मौलिक हक एवं मानव अधिकारको उल्लंघन, राज्य निकायहरू विभेदपूर्ण, असमान एवं अपमानपूर्ण व्यवहारबाट मेरो जीवन, सवतन्त्रता, समानता तथा मर्यादामा पर्न गएको असरको सम्बोधन जस्ता अत्यावश्यक विषयसँग सम्बन्धित भएकोले सर्वोच्च अदालत नियमावली २०७४ को नियम ७३ अनुसार यस रिट निवेदनलाई अग्राधिकार प्रदान गरि सुनवाई गरि पाउँ ।

१२. यस विषयमा समानान्तर क्षेत्राधिकार ग्रहण गर्ने अन्य कुनै अड्डा अदालतमा उजुरी तथा निवेदन दिएको छैन ।

१३. यसमा हाल कानून व्यवसायी नियुक्त गरिएको छैन । पछि नियुक्त हुने कानून व्यवसायीद्वारा प्रस्तुत गरिने बहस बुँदालाई समेत यसै निवेदनपत्रको अभिन्न अङ्ग मानी पाउँ ।

१४. संलग्न कागजात :

(क) प्रकरण ५ मा व्याख्या गरिएको बमोजिमको क्रमांशमा मेरो व्यक्तिगत कागजप्रमाण तथा मैले विपक्षी निकायहरूमा गरेको र मलाई विपक्षी निकायहरूबाट प्राप्त पत्राचारहरू

(ख) संयुक्त राष्ट्र संघद्वारा प्रकाशित पारलैङ्गिक तथ्य पत्र (Fact Sheet) अङ्ग्रेजीमा तथा त्यसको अनौपचारिक नेपाली सम्पादन थान ...२

(ग) आइएसबिएन ९७८-९९३७-०-८४६९-७ रहेको क्वयेर युथ ग्रुप र क्याम्पेन फर चेन्ज संस्थाहरूद्वारा प्रकाशित 'यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता): आधारभूत अवधारणा' नामक पुस्तक

(घ) निम्नलिखित दस्तावेज प्रस्तुत मुद्दासंग सान्दर्भिक भएकाले बुझी प्रमाणमा लगाई पाउँ ।

(१) United Nations General Assembly: 12 July 2018, A/73/152: Report of the Independent Expert on protection against violence and discrimination based on sexual orientation and gender identity अन्तर्गत A - 21, 22, 23, B - 25, C - 28, 29, 30, 31, 32, E - 36, 37, F- 39, 40, र 81:
https://undocs.org/A/73/152

जरुकृती




(२) United Nations Human Rights Council: 12 February 2020, A/HRC/43/52: Report of the Special Rapporteur on the right to privacy अन्तर्गत 20 (d), 27 (c), र 6 - 35, 36 :
https://undocs.org/A/HRC/43/52

(३) UN Committee on Economic, Social and Cultural Rights - General Comment No.14 (2000) on the right to the highest attainable standard of health §8,
https://digitallibrary.un.org/record/425041

(४) General Comment No. 22 (2016) on the right to sexual and reproductive health: §58
https://digitallibrary.un.org/record/832961

(५) UN Special Rapporteur on Torture, and other cruel, inhuman or degrading treatment or punishment, report 2016, 5 January 2016, A/HRC/31/57 - 49, 72 (e). (h).
https://undocs.org/pdf?symbol=en/A/HRC/31/57

(६) UN Independent Expert, report to the UN Human Rights Council, June 2017, A/HRC/35/36: 57.
https://digitallibrary.un.org/record/1301206/files/A_HRC_35_36-EN.pdf

(७) Eliminating forced of coercive and otherwise involuntary sterilization; An inter-agency statement of OHCHR, UN Women, UNAIDS, UNDP, UNFPA, UNICEF and WHO: Page number 7 - Transgender persons and intersex persons
https://www.who.int/reproductivehealth/publications/gender_rights/eliminating-forced-sterilization/en/

(८) Gender Identity Law as approved by the Senate of Argentina on May 8, 2012:
https://tgeu.org/argentina-gender-identity-law/

(९) Transgender Persons (Protection of Riqhts) Act, 2018 – Pakistan:
http://www.na.gov.pk/uploads/documents/1528787262_286.pdf

(१०) Parliament of Victoria Births, Deaths and Marriages Registration Amendment Bill 2016 - Parliament of Victoria:
http://www.na.gov.pk/uploads/documents/1528787262_286.pdf

(११) NYC Commission on Human Rights Legal Enforcement Guidance on Discrimination on the Basis of Gender Identity or Expression: Local Law No. 3 (2002); N.Y.C. Admin. Code § 8-102
https://www1.nyc.gov/site/cchr/law/legal-guidances-gender-identity-expression.page

(१२) The Yogyakarta Principles - Principle 3, Principle 31, Principle 6.
https://yogyakartaprinciples.org/

(१३) Argentina's Gender Identity Law as approved by the Senate of Argentina on May 8, 2012
https://globaltransaction.files.wordpress.com/2012/05/argentina-gender-identity-law.pdf

जरुकृती

ऋक्की

(१४) Parliament of Victoria Births, Deaths and Marriages Registration Amendment Bill 2016
https://www.parliament.vic.gov.au/publications/research-papers/download/36-research-papers/13775-births-deaths-and-marriages-registration-amendment-bill-2016

(१५) AN ACT to amend the Gender Identity, Gender Expression and Sex Characteristics Act, Cap. 540 – Malta:
http://justiceservices.gov.mt/DownloadDocument.aspx?app=lom&itemid=12312&l=1

(१६) Transgender Persons (Protection of Rights) Act,2018 -- Pakistan
http://www.na.gov.pk/uploads/documents/1528787262_286.pdf

(१७) Prop 74 L (2015-2016) Proposition to the Storting (proposal for a legislative decision) The Legal Gender Amendment Act:
https://tgeu.org/wp-content/uploads/2016/07/Prop74LEng.pdf

(१८) Australian Human Rights Commission - ISBN 978-1-921449-10-9 - Recommendation 2 & 3.
https://humanrights.gov.au/our-work/lgbti/publications/sex-files-legal-recognition-sex-documents-and-government-records

(१९) California Gender Recognition Act - Senate Bill No. 179 CHAPTER 853
https://leginfo.legislature.ca.gov/faces/billNavClient.xhtml?bill_id=201720180SB179

(२०) World Professional Association for Transgender Health (WPATH) Identity Recognition Statement:
https://www.wpath.org/media/cms/Documents/Web%20Transfer/Policies/WPATH%20Identity%20Recognition%20Statement%2011.15.17.pdf

(२१) Guidelines for gender-inclusive language in English (UNITED NATIONS Gender-inclusive language)
https://www.un.org/en/gender-inclusive-language/guidelines.shtml

(२२) Australian Human Rights Commission, ISBN 978-1-921449-10-9 - The sex and gender diversity project
https://humanrights.gov.au/sites/default/files/content/genderdiversity/SFR_2009_Web.pdf

(२३) Excerpt from: Prop 74 L (2015-2016) Proposition to the Storting (proposal for a legislative decision) The Legal Gender Amendment Act, Norway
https://tgeu.org/wp-content/uploads/2016/07/Prop74LEng.pdf

(२४) AN ACT to amend the Gender Identity, Gender Expression and Sex Characteristics Act, Cap. 540 – Malta
http://justiceservices.gov.mt/DownloadDocument.aspx?app=lom&itemid=12312&l=1

(२५) Right to erasure - Information Commissioner's Office, UK
https://ico.org.uk/for-organisations/guide-to-data-protection/guide-to-the-general-data-protection-regulation-gdpr/individual-rights/right-to-erasure/

ऋक्की

